नेपाल सरकार

वन तथा वातावरण मन्त्रालय

# वन तथा भू-संरक्षण विभाग

# कार्यक्रम कार्यान्वयन कार्यविधि, २०७५

आ. व. २०७५/०७६

# विषय-सूचि

## अ) संघीय कार्यालयको कार्यक्रम

वन तथा वातावरण मन्त्रालय अन्तर्गत वन तथा भू-संरक्षण विभागले आ.व. २०७५/७६ मा संचालन तथा सम्पन्न गर्नु पर्ने विभिन्न कार्यक्रमहरुका लागि नेपाल सरकारले जम्मा ६ करोड ६९ लाखको वजेट व्यवस्था गरेको छ र ती कार्यक्रमहरु संघीय सरकारले व्यवस्था गरेका जनशक्तिबाट साथै आवश्यक मात्रामा सेवा प्रदायकबाट सेवा खरीद गरी संचालन तथा सम्पन्न गरिनेछ ।

### १. राष्ट्रिय वन विकास तथा व्यवस्थापन कार्यक्रम (व.नं.शि.उ. ३२९१०६)

### १.१ राष्ट्रिय वीउ केन्द्र र प्रयोगशाला (National Seed Centre and Laboratory) स्थापना (प्रमाणिकरण समेत)

राष्ट्रिय वीउ केन्द्र र प्रयोगशाला स्थापना तथा सन्चालन गर्नका लागि आ.व. २०७५/७६ मा रु.१०००००००।- वजेट व्यवस्था गरेको छ। यस कार्यका लागि निम्न लिखित कृयाकलापहरु सन्चालन गरिने छ ।

- देशको विभिन्न क्षेत्रमा स्थापना भएका वन वीउ वगैंचा तथा वीउ उत्पादन क्षेत्रहरुको संरक्षण तथा व्यवस्थापन गर्दै आधुनिक उपकरणहरुको प्रयोग गरी रुख चढ्ने सुरक्षित विधी अपनाई उन्नत वीउ संकलन तथा प्रमाणिकरण गरिने छ ।
- लोपोन्मुख एवं संकटापन्न अवस्थामा रहेका महत्वपुर्ण रुख प्रजातिहरुको स्वस्थानीय तथा परस्थानीय अनुवांशिक संरक्षणका लागि प्रजाति संरक्षण क्षेत्र, वन वीउ वगैंचा तथा वीउ उत्पादन क्षेत्रहरुको स्थापना तथा व्यवस्थापन गरिने छ ।
- हात्तिसार, काठमाडौंमा रहेको चिस्यान केन्द्र (Cold Storage) र बीउ प्रयोगशालालाई समय सापेक्ष चुस्त दुरुस्त बनाउनका लागि आवस्यक पर्ने आधुनिक औजार, उपकरणहरु खरीद गरिनेछ ।
- विनियोजित बजेट शंभाव्यता अध्ययन विस्तृत परियोजना प्रतिवेदन तयारी, इक्विपमेन्ट खरिद तथा मर्मत सुधार, बीउ संकलन तथा खरिद, संरक्षण, प्याकेजिङ, किटनाशक औषधि खरिद आदि कार्यमा समेत खर्च गर्न सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

राष्ट्रिय वीउ केन्द्र र प्रयोगशाला स्थापना तथा सन्चालनका आवश्यक जनशक्ति संघीय सरकारले व्यवस्था गर्नेछ । वींउ संकलनका लागि आवश्यक जनशक्ति तयार गर्न वन अनुसन्धान तथा तालिम केन्द्रसंग समन्वय गरी प्रदेश स्तरमा आवश्यक तालिमको आयोजना गरिने छ । यसका साथै अध्ययन अनुसन्धान जस्ता कार्यहरु पुरै वा आँशिक रुपमा सेवा पदायकबाट समेत गर्न सकिनेछ ।

**अपेक्षित उपलब्धि**

- राष्ट्रिय वीउ केन्द्र र प्रयोगशाला स्थापना भई सन्चालन आउनेछ ।
- प्रमाणित गुणस्तरीय वीउबाट सर्वसाधारणहरु लाभान्वित हुने ।

### १.२. संकटापन्न लोपोन्मुख प्रजातिको संरक्षण योजना तयारी

यस कार्यक्रमबाट विभिन्न वैज्ञानिक अध्ययनहरुले नेपालमा संकटापन्न र लोपोन्मुख अवस्थामा रहेका भनी पहिचान गरेका प्रजातिहरुको संरक्षण योजना तयार गरिनेछ । वनस्पति प्रजातिको वासस्थान र त्यसको संरक्षणमा रहेका चुनौतिहरुलाई ध्यान दिई संरक्षण योजना तयारी गर्नुपर्दछ । संरक्षण योजना बनाउनका लागि वन तथा भू-संरक्षण विभागले कार्यविवरण (Terms of Reference) तयार तथा स्वीकृत गर्नुपर्दछ । यसमा विनियोजित बजेट इन्धन, यातायात, दैनिक भ्रमण भत्ता, खाजा तथा अन्तरक्रिया कार्यक्रममा खर्च गर्न सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

वन तथा भू-संरक्षण विभागले विभाग अन्तर्गका कर्मचारीबाट वा प्रदेश मन्त्रालय र डिभिजन वन कार्यालयहरुको सहयोग लिइ यो कार्य संचालन गर्न सक्नेछ । यो कार्यक्रम प्रचलित कानून बमोजिम सेवा प्रदायकबाट पनि सञ्चालन गर्न सकिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमका लागि नेपाल सरकारले १२ लाख वजेटको व्यवस्था गरेको छ ।

**अपेक्षित उपलब्धि**

- ३ वटा संकटापन्न वनस्पति प्रजातिहरुको संरक्षण तथा व्यावस्थापन योजना तयार भइ कार्यान्वयनमा जानेछ ।

### १.३. संकटापन्न प्रजातिको Seed orchard and seed stand स्थापना गर्ने

संकटापन्न प्रजातिहरुको संरक्षणका साथै ती प्रजातिहरुको वीउको उत्पादन र उपलब्धतालाई दिगो बनाउनका लागि त्यस्ता प्रजातिहरु पहिचान गरी स्वस्थानिय वा परस्थानिय तरिकाले ३ वटा Seed orchard वा seed stand स्थापना गरिने छ । यसको रकम खर्च गर्दा लगत इष्टिमेट तयार गरी नियमानुसार स्वीकृत गराई बीउ बँगैचा स्थापना, तारवार, वृक्षारोपण, तथा टेन्डिङ अप्रेरशन, यातायात, दैनिक भ्रमण भत्ता लगायतका कार्यहरु समेतमा खर्च गर्न सकिनेछ । वीउ बगैंचा सामुदायिक वनमा पर्ने भएमा सम्बन्धित सा.व.उ.स. सँग समन्वय गरी कार्ययोजनामा समावेश गरिनेछ र उ.स. मार्फत भुक्तानी गरिनेछ ।

**जनशक्ति व्यवस्थापन**

सहभागितात्मक तरिकाले सरोकारवालाहरु समेटी संकटापन्न प्रजाति पहिचान गरी उक्त प्रजातिको बीउ बँगैचा तथा बीउ वन स्थापना गरिनेछ । यसमा विभाग आफैले वा प्रदेश मन्त्रालय वा डिभिजन वन कार्यालयबाट प्राविधिक सहयोग उपलब्ध गराउनु पर्नेछ ।

**बजेट व्यवस्थापन**

यस आ.व. मा यो कार्यक्रमका लागि ३० लाख रुपिया वजेटको व्यवस्था गरेको छ ।

**अपेक्षित उपलब्धि**

- प्राथमिकतामा परेका संकटापन्न प्रजातिहरुको ३ वटा वीउ बगैचा वा वीउ वन स्थापना भई व्यवस्थापन भएको हुनेछ ।

**१.४. सामुदायिक वन अध्ययन केन्द्र, ठोकर्पा, सिन्धुपाल्चोक**

सामुदायिक वन अध्ययन केन्द्र स्थापना तथा सञ्चालनका लागि भएको सम्भाव्यता अध्ययन र विस्तृत परियोजना दस्तावेज (डीपिआर) ले सिफारिस गरेका भौतिक पूर्वाधार निमार्ण, फर्निचर तथा आवश्यक मसलन्दका लागि यसमा विनियोजित बजेट खर्च गर्न सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

यो केन्द्र स्थापन तथा संचालनका लागि संघिय सरकारले स्वीकृत गरेको संरचना अनुसारको जनशक्तिको व्यवस्था गरिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमका लागि ८० लाखको वजेट विनियोजन गरेको छ ।

**अपेक्षित उपलब्धि**

- सिन्धुपाल्चोकको ठोकर्पामा सामुदायिक वन अध्ययन केन्द्र स्थापना भइ सेवा प्रवाह हुनेछ ।
- सामुदायिक वनसँग सम्वन्धि अध्ययन तथा अनुसन्धानका लागि आउने विद्यार्थी तथा अन्य व्यक्ति तथा संस्थाहरु लाभान्वित हुनेछ ।

**१.५. वैज्ञानिक वन व्यवस्थापनको अन्तरक्रिया र प्रचार प्रसार**

यसमा विनियोजित बजेट केन्द्र, प्रदेश तथा डिभिजनस्तरमा वैज्ञानिक वन व्यवस्थापन सम्बन्धि अन्तरक्रिया कार्यक्रम जस्तै गोष्ठी, कार्यशाला संचालनमा खर्च गर्नुपर्नेछ । यसका साथै विभिन्न संचार माध्यमहरु जस्तै एफ्.एम., रेडियो, टेलिभिजन, पत्रपत्रिका, पर्चा पम्पलेट आदिबाट वैज्ञानिक वन व्यवस्थापन सम्बन्धी जनचेतना जगाउने कार्यहरुमा पनि खर्च गर्न सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

वन तथा भू-संरक्षण विभागले आफ्नो जनशक्ति तथा आवश्यकता अनुसार विज्ञहरुको सहयोगमा यो कार्यकेम संचालन गर्न सकिनेछ । प्रदेश मन्त्रालय तथा डिभिजन वन कार्यालय र प्रदेश वन निर्देशनालय तथा तालिम केन्द्रहरुको पनि सहयोग लिन सकिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.२००००००।- व्यंवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- अन्तर्कृया तथा प्रचारप्रसार कार्यक्रमबाट सरोकारवालाहरु वीच गहन छलफल तथा अनुभवको आदानप्रदान भई बैज्ञानिक वन व्यवस्थापन सम्वन्धि बुझाइ तथा व्यवस्थापनमा एकरुपता आउने ।

- विज्ञ साथै राजनैतिक नेतृत्व तथा सर्वसाधारणहरुमा पनि प्रचारप्रसारको माध्यमबाट वैज्ञानिक वन व्यवस्थापन सम्बन्धि सचेतनामा बृद्धि हुनेछ ।

**१.६. अन्तरप्रदेश समन्वय, बैठक**

वन व्यवस्थापनका समसामयिक सवालहरुको बारेमा छलफल गर्नका लागि संघ तथा प्रदेश स्तरमा कार्यरत वन प्राविधिकहरु एवं आवश्यकता अनुसार साझेदार निकायहरु बीच समन्वय बैठक, गोष्ठि तथा कार्यशाला संचालन गर्नुपर्नेछ र सो कार्यक्रमहरुमा लाग्ने खाजा, खाना, यातायात तथा दैनिक भ्रमण भत्ता, बैठक भत्ताका लागि यसमा विनियोजित बजेट खर्च गर्न सकिनेछ ।

**बजेट व्यवस्थापन**

अन्तरप्रदेश समन्वय बैठक संचालनका लागि यो आर्थिक वर्ष ५ लाख वजेटको व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

छलफल तथा अन्तरक्रियाको माध्यमबाट ज्ञान तथा अनुभवहरुको आदानप्रदान भई कार्यक्रम विकास तथा कार्यान्वयनमा एकरुपता आई कार्यक्रमहरको प्रभावकारीतामा बृद्धि हुनेछ ।

**१.७. संघीय वन सम्बन्धि निर्देशिका तर्जुमा, परिमार्जन**

देश संघीय संरचनामा गइसकेकोले वन सम्बन्धि विभिन्न निर्देशिकाहरु परिमार्जन गर्नुका साथै कतिपय नयाँ निर्देशिकाहरु बनाउनु पर्दछ । यसका लागि वन तथा भू-संरक्षण विभागले कुन कुन निर्देशिका परिमार्जन गर्नुपर्ने हो र कुन कुन नयाँ निर्देशिका बनाउनु पर्ने हो सो को सूची तयार गर्नुपर्दछ । यसमा विनियोजित बजेट ती निर्देशिकाहरु तर्जुमा, परिमार्जन तथा प्रकाशनका लागि स्थलगत भ्रमण, अन्तरक्रिया, बैठक भत्ता, खाजा, खाना एवं निर्देशिकाहरु प्रकाशन र वितरणमा खर्च गर्नु पर्नेछ ।

**जनशक्ति व्यवस्थापन**

विभागले विभागीय कर्मचारी तथा अन्य विज्ञहरुको सहयोग लिई आवश्यक निर्देशिकाहरुको परिमार्जन तथा नयाँ निर्देशिकाहरु निर्माण गरिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.४००००० ।- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- परिवर्तित व्यवस्था अनुसार वन व्यवस्थापनसँग सम्वन्धित नयाँ तथा परिमार्जित निर्देशिकाहरु निर्माण भई कार्यान्वयनमा आएको हुनेछ ।

**१.८. संघीय वन ऐन, नीति, निर्देशिका अभिमुखीकरण**

संघीय संरचना बमोजिम संघले तर्जुमा गरेका ऐन, नीति तथा निर्देशिकाहरुको प्रदेश तथा जिल्लास्तरमा अभिमुखीकरण गरी संघीय कानून तथा नीतिहरुको बारेमा जानकारी गराउन आवश्यक रहेको छ ।

प्रदेश तथा डिभिजन स्तरमा प्रादेशिक उद्योग, पर्यटन, वन तथा वातावरण मन्त्रालय र डिभिजन वन कार्यालयएव सव-डिभिजन वन कार्यालयमा कार्यरत कर्मचारीहरुलाई संघीय वन ऐन, नीति, नियम तथा निर्देशिकाका मुख्य प्रावधानहरुको विषयमा अभिमुखीकरण कार्य सञ्चालन गर्नका लागि प्रचलित कानून बमोजिम यसमा विनियोजित बजेट खर्च गर्न सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

यस कार्यक्रमलाई प्रभावकारी ढंगबाट सम्पन्न गर्नका लागि आवश्यक जनशक्ति विभाग, वन तथा वातावरण मन्त्रालय, प्रदेश मन्त्रालय तथा प्रदेश निर्देशनालय वा अन्य विज्ञहरुको सहयोग लिन सकिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.२१०००००।- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- परिवर्तित व्यवस्थामा वन तथा वातावरणको संरक्षण र व्यवस्थापनलाई प्रभावकारी वनाउनका लागि निर्माण तथा परिमार्जन भएका एन नीति तथा निर्देशिकाहरुका वारेमा सरोकारवालाहरुलाई जानकारी गराउनका लागि अभिमूखीकरण कार्यहरु संचालन गरिनेछ ।

**१.९. सामुदायिक वनमा पर्यापर्यटन प्रबर्धनका कार्यविधि तयार**

सामुदायिक वनमा पर्यापयर्टन प्रबर्धनका लागि कार्यविधि तर्जुमा गर्नका लागि यो कार्यक्रम तय गरिएको हो । कार्यविधि तर्जुमाका लागि आवश्यकताका आधारमा अन्तरक्रिया, बैठक भत्ता, खाजा र कार्यविधि प्रकाशन तथा वितरणमा यो बजेट खर्च गर्न सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

विभागले आफ्नै जनशक्ति वा आवश्यक भएमा सेवा प्रदायकवाट सेवा खरीद गरेर कार्यविधि तयार गर्न सक्नेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.३०००००।- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

सामुदायिक वनमा उपभोक्ता समूहरु तथा निजी वा सहकारी क्षेत्रको सहभागीता र सहकार्यमा पर्यापर्यटनको विकासका लागि आवश्यक कार्यविधि निर्माण भई कार्यान्वयनमा लगेको हुनेछ ।

**१.१०. दिगो वन व्यवस्थापनका आधार र सूचकहरु तयार गर्ने**

International Tropical Timber Organization (ITTO) एवं Forest Stewardship Council (FSC) आदिले तयार गरेका दिगो वन व्यवस्थापनका आधार र सूचकहरु विश्वस्तरका लागि तयार गरिएका हुन्छन् । देश विशेषका आधारमा त्यस्ता दिगो वन व्यवस्थापनका आधार र सूचकहरु फरक हुन्छन् । धेरै देशहरुले आफ्नो देशमा लागु हुने गरी आधार र सूचकहरु तयार गरेका छन् । नेपालमा हालसम्म

त्यस्ता दिगो वन व्यवस्थापनका आधार र सूचकहरु तयार नभएको अवस्थामा नेपालको वन तथा सामाजिक आर्थिक अवस्थाको आधारमा दिगो वन व्यवस्थापनका आधार र सूचकहरु तयार गर्नका लागि यो कार्यक्रम राखिएको हो । यसमा विनियोजित बजेट स्थलगत भ्रमण, अन्तरक्रिया मसलन्द खरिद, बैठक भत्ता, छपाई आदि कार्यक्रमका लागि खर्च गर्न सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

विभागले आफ्नै जनशक्ति प्रयोग गरेर वा वन तथा वातावरण मन्त्रालय अन्तरगतका निकायहरुको सहयोग लिई यो कार्य गर्न सक्नेछ । यो कार्य प्रचलित कानून बमोजिम सेवा प्रदायकबाट पनि गर्न सकिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.५०००००।- व्यवस्था गरिएको छ । सेवा प्रदायकबाट परामर्श सेवा खरिद गरी कार्यक्रम गर्दा यसमा विनियोजित बजेटको बढीमा ५ प्रतिशत रकम कार्यक्रम सचालनका लागि व्यवस्थापकीय कार्यमा खर्च गर्न सकिनेछ ।

**अपेक्षित उपलब्धि**

नेपालको अवस्था सुहाउँदो दिगो वन व्यवस्थापनका आधार र सूचकहरु तयार भई कार्यान्वयन हुने ।

## १.११. वन पैदावार ट्र्याकिंग सूचना प्रणाली (Forest Product Tracking Information System) विकास तथा कार्यान्वयन

वन पैदावार संकलन तथा बिक्री वितरण निर्देशिका २०७३ को अधिनमा रही वन पैदावारहरुको संकलन, बिक्री बितरण एवं ओसार पसारसम्मको प्रक्रियालाई पारदर्शी, छिटो छरितो र व्यवस्थित बनाउने उदेश्यले सबै पक्षहरुलाई समेटेर वन पैदावारको संकलन, घाटगदी, बिक्री बितरण, ओसार पसार, अनुगमन तथा तथ्याँक आदानप्रदान गर्नुपर्ने हुनाले गत आर्थिक वर्षमा विकास गरिएका प्रणालीलाई नमुना चरणमा कम्तीमा एक डिभिजन वन कार्यालयमा कार्यान्वयन गरिनेछ ।

**जनशक्ति व्यवस्थापन**

विभागले आफू मातहतको कर्मचारीहरुको संलग्नतामा अवश्यक संख्यामा अन्य ब्यक्ति करार वा सेवा प्रदायक संस्थाबाट परामर्श सेवा खरीद गरी संचालन गर्न सकिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.५०००००।- व्यवस्था गरिएको छ । सेवा प्रदायकबाट परामर्श सेवा खरिद गरी कार्यक्रम गर्दा यसमा विनियोजित बजेटको बढीमा ५ प्रतिशत रकम कार्यक्रम सचालनका लागि व्यवस्थापकीय कार्यमा खर्च गर्न सकिनेछ ।

**अपेक्षित उपलब्धि**

- कम्तिमा एकवटा डिभिजन वन कार्यालयको क्षेत्रबाट हुने वनपैदावारको विक्री वितरण प्रकृया तथा ओसारपसार गर्ने प्रणालीलाई वन पैदावार ट्र्याकिंग प्रणालीमा लगिएको हुनेछ ।

१.१२. वन अतिक्रमणको तथ्याङ्क अद्यावधिक गर्ने

नेपालमा वन अतिक्रमणको स्पष्ट तथ्याङ्क यकिन गर्नका लागि यो कार्यक्रम राखिएको हो । यसमा विनियोजित बजेट स्थलगत भ्रमण, इन्धन, यातायात खर्च, अन्तरक्रिया तथा प्रतिवेदन तयारीमा खर्च गर्न सकिनेछ। कार्यक्रम सम्पन्न भएपछि वन अतिक्रमणको जिल्लागत तथ्याँक तयार हुनेछ ।

**जनशक्ति व्यवस्थापन**

विभागले आफू मातहतका कर्मचारीहरु परिचालन गरी अन्य सम्वन्धित निकायहरुको सहयोग लिइ यो कार्यक्रम संचालन गर्न सक्नेछ । यो कार्यक्रम सेवा प्रदायक संस्थाबाट परामर्श सेवा खरीद गरी समेत संचालन गर्न सकिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.१००००००।- व्यवस्था गरिएको छ । सेवा प्रदायकबाट परामर्श सेवा खरिद गरी कार्यक्रम गर्दा यसमा विनियोजित बजेटको बढीमा ५ प्रतिशत रकम कार्यक्रम सचालनका लागि व्यवस्थापकीय कार्यमा खर्च गर्न सकिनेछ ।

**अपेक्षित उपलब्धि**

- देशभरी भएको वन अतिक्रमनको यथार्थ तथ्यांक तयार भएको हुनेछ ।

**१.१३. Ramsar Information Sheet (RIS) तयार गर्ने**

संरक्षित क्षेत्र बाहिर रहेका रामसारमा सूचिकृत सिमसार क्षेत्रहरुको बारेमा रामसार सचिवालयमा पेश गर्नु पर्ने Ramsar Information Sheet (RIS) तयार गर्नका लागि यो कार्यक्रम तय गरिएको हो । यसमा विनियोजित वजेट स्थलगत भ्रमण, अन्तरक्रिया, दैनिक भ्रमण भत्ता, इन्धन, खाजा, स्टेशनरी आदिमा खर्च गर्न सकिनेछ । यो कार्य सेवा प्रदायकबाट पनि सञ्चालन गर्न सकिनेछ । सेवा प्रदायकबाट परामर्श सेवा खरिद गरी कार्यक्रम गर्दा यसमा विनियोजित बजेटको बढीमा ५ प्रतिशत रकम कार्यक्रम सचालनका लागि व्यवस्थापकीय कार्यमा खर्च गर्न सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

विभागले आफू मातहतका कर्मचारीहरु परिचालन गरी अन्य सम्वन्धित निकायहरुको सहयोग लिइ यो कार्यक्रम संचालन गर्न सक्नेछ । यो कार्यक्रम सेवा प्रदायक संस्थाबाट परामर्श सेवा खरीद गरी समेत संचालन गर्न सकिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.१२०००००।- व्यवस्था गरिएको छ । सेवा प्रदायकबाट परामर्श सेवा खरिद गरी कार्यक्रम गर्दा यसमा विनियोजित बजेटको बढीमा ५ प्रतिशत रकम कार्यक्रम सचालनका लागि व्यवस्थापकीय कार्यमा खर्च गर्न सकिनेछ ।

**अपेक्षित उपलब्धि**

- Ramsar Information Sheet (RIS) समयमै तयार भएको हुनेछ ।

## १.१४. वन संरक्षण सूचना संकलन एवं कक्ष सञ्चालन

विभागमा पहिले भएको वन सूचना कक्षलाई आधुनिक प्रविधियुक्त बनाई डिभिजन वन कार्यालय तथा प्रदेश वन निर्देशनालयसंग वन डढेलो तथा वन संरक्षण सम्बन्धी सूचना नियमित रुपमा संकलन गर्ने तथा आवश्यक सूचना प्रवाह गर्ने प्रणाली विकास गरिनेछ । जसमा High Speed Internet, Computer, printer, LED Display TV, Direct Phoneline/Hotline, Mobile, Fax जस्ता उपकरणहरु खरिद गरी ब्यबस्थित गर्नुपर्ने छ । साथै यसमा विनियोजित रकम समन्वय, बैठक, कक्ष संचालनका लागि पुर्वाधार विकास, आवश्यक सुविधा र अन्य व्यवस्थापकीय कार्यमा खर्च गर्न सकिनेछ । Satellite को Data Aquire गर्नको लागि भिन्दै Server संचालनमा ल्याई नेपालभरी लागेको वन डढेलोको विवरण प्राप्त गर्ने संयन्त्र तयार गर्न सकिनेछ ।

### जनशक्ति व्यवस्थापन

विभागले यस कार्यका लागि एउटा छुट्टै टोली बनाई परिचालन गरिनेछ । सो कार्यका लागि विज्ञ तथा वन डढेलो नियन्त्रण तथा व्यवस्थापन कार्यमा संलग्न निकायहरुसंग समन्वय गर्न तथा राय सुझाव लिन सकिनेछ ।

### बजेट व्यवस्थापन

यो कार्यक्रमको लागि वजेट रु.१००००००|-- व्यवस्था गरिएको छ ।

### अपेक्षित उपलब्धि

- विभाग अन्तर्गत एकवटा सूचना संकलन तथा तथ्यांक व्यवस्थापन कक्ष स्थापन भइ संचालनमा आएको हुनेछ ।

## १.१५. साइटिस सम्बन्धि प्रतिवेदन तयारी

साइटिस महासन्धी अन्तरगत नेपालमा वनस्पति तर्फ व्यवस्थापन निकायको रुपमा वन तथा भू-संरक्षण विभाग रहेकोले वनस्पति सम्बन्धी साइटिस सचिवालयमा पेश गर्नुपर्ने प्रतिवेदन तयार गर्नका लागि यो कार्यक्रम तय गरिएको हो । यो कार्य गर्दा लाग्ने स्थलगत भ्रमण, अन्तरक्रिया, खाजा, प्रतिवेदन तयारी आदिमा बजेट खर्च गर्न सकिनेछ ।

### जनशक्ति व्यवस्थापन

विभागले आफू अन्तर्गतका कर्मचारीहरु परिचालन गरी तथ्यांक संकलन तथा प्रतिवेदन तयार गर्न सक्नेछ । यो कार्य विस्तृत कार्यविवरण बनाई सेवा प्रदायकबाट पनि सञ्चालन गर्न सकिनेछ । सो कार्यका लागि विज्ञहरुसंग समन्वय गर्न तथा राय सुझाव लिन सकिनेछ ।

### बजेट व्यवस्थापन

यो कार्यक्रमको लागि वजेट रु.५०००००|- व्यवस्था गरिएको छ । सेवा प्रदायकबाट परामर्श सेवा खरिद गरी कार्यक्रम गर्दा यसमा विनियोजित बजेटको बढीमा ५ प्रतिशत रकम कार्यक्रम सचालनका लागि व्यवस्थापकीय कार्यमा खर्च गर्न सकिनेछ ।

अपेक्षित उपलब्धि

वार्षिक रुपमा साइटिस सचिवालयमा पठाउनु पर्ने प्रतिवेदन समयमै तयार हुनेछ ।

## १.१६. वन सम्बन्धि तथ्याङ्क व्यवस्थापन

यसमा विनियोजित बजेट वन सम्बन्धी विविध तथ्याङ्क संकलन, व्यवस्थापन, तथ्याँक आवश्यकता अध्ययन (Data Need Assesment), स्थलगत भ्रमण तथा अन्तरक्रिया कार्यक्रम, विभिन्न फर्मेटहरु तयारी तथा विकास, साथै आवश्यक सफ्टवेयर विकास तथा खरिदमा खर्च गर्न सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

विभागले आफू अन्तर्गतका कर्मचारीहरु परिचालन गरी वा आवश्यक रुपमा करारमा राखेर वन व्यवस्थापन सम्वन्धि तथ्यांक संकलन तथा प्रतिवेदन तयार गर्न सक्नेछ । यो कार्य विस्तृत कार्यविवरण बनाई सेवा प्रदायकबाट पनि सन्चालन गर्न सकिनेछ

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.१५०००००।- व्यवस्था गरिएको छ । सेवा प्रदायकबाट परामर्श सेवा खरिद गरी कार्यक्रम गर्दा यसमा विनियोजित बजेटको बढीमा ५ प्रतिशत रकम कार्यक्रम सचालनका लागि व्यवस्थापकीय कार्यमा खर्च गर्न सकिनेछ ।

**अपेक्षित उपलब्धि**

- विभाग अन्तर्गत तथ्यांक व्यवस्थापनको जिम्मेवारी सहितको एकवटा शाखा स्थापना भएको हुनेछ ।
- वन व्यवस्थापनसँग संम्वन्धित तथ्यांकहरु कम्प्यूटर प्रणालीमा प्रविष्ट भएको हुनेछ ।

## १.१७. वैज्ञानिक वन व्यवस्थापनको समीक्षा, सहजीकरण र कार्यान्वयन

यसमा विनियोजित बजेट जिल्ला/डिभिजनस्तरमा वैज्ञानिक वन व्यवस्थापन कार्यान्वयन गर्दाका सिकाईहरु तथा आएका समस्याहरुको समीक्षा एवं पुनरावलोकन अन्तरक्रिया एवं बैठक कार्यक्रम गर्नका लागि खर्च गर्न सकिनेछ । यस अन्तरगतको रकम वैज्ञानिक वन व्यवस्थापनका कार्यमूलक परीक्षण आदि जस्ता कार्यमा समेत खर्च गर्न सकिनेछ । जिल्ला स्तरमा सवैखालका वन व्यवस्थापन पद्दतीमा वैज्ञानिक वन व्यवस्थापनलाई सहजीकरण गर्नका लागि यातायात तथा दैनिक भ्रमण भत्ता, मसलन्द खरिद आदिमा समेत यो बजेट खर्च गर्न सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

यो कार्यक्रमलाई प्रभावकारी ढंगबाट कार्यान्वयनमा लानका लागि वैज्ञानिक वन व्यवस्थापनमा राम्रो ज्ञान र दखल भएका विभाग, मन्त्रालय वा डिभिजन वन कार्यालयहरुसँग समन्वय गरी कर्मचारहरु परिचालन गरी संचालन गर्न सक्नेछ । यो कार्य विस्तृत कार्यविवरण बनाई सेवा प्रदायकबाट पनि सन्चालन गर्न सकिनेछ । सो कार्यका लागि विज्ञहरुसंग समन्वय गर्न तथा राय सुझाव लिन सकिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.५०००००|- व्यवस्था गरिएको छ । सेवा प्रदायकबाट परामर्श सेवा खरिद गरी कार्यक्रम गर्दा यसमा विनियोजित बजेटको बढीमा ५ प्रतिशत रकम कार्यक्रम सचालनका लागि व्यवस्थापकीय कार्यमा खर्च गर्न सकिनेछ ।

**अपेक्षित उपलब्धि**

बैज्ञानिक वन व्यवस्थापन लागु भएका र लागु हुने सम्भावना वोकेका डिभिजन वन कार्यालयको क्षेत्रहरुका कर्मचरी, वन समूह प्रतिनिधिहरु र अन्य सरोकारवालहरुमा यस पद्दती सम्वन्धी सचेतना हुने र विज्ञता बढेको हुनेछ ।

**१.१८. वन डढेलो सम्बन्धी अध्ययन, अनुगमन र सहजीकरण**

यो कार्यक्रममा विनियोजित बजेट वन डढेलो न्यूनिकरणका लागि स्थलगत सहजीकरण, अभिमुखीकरण, भ्रमण, यातायात, नापजाँच, अनुसन्धान, अन्तरक्रिया, तथ्याँक संकलन लगायतका कार्यमा खर्च गर्न सकिनेछ । यो कार्य सम्पन्न भएपश्चात सहजीकरण गरिएका जिल्लाहरुको वन डढेलो संवन्धी प्रतिवेदन तयार हुनेछ । यो कार्य प्रचलित कानून बमोजिम सेवा प्रदायकबाट समेत सञ्चालन गर्न सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

वन तथा भूसंरक्षण विभागका कर्मचारीहरु परिचालन गरि यो कार्यक्रम संचालन गरिने छ । आबस्यक मात्रामा डिभिजन वन कार्यालयहरुसँग समन्वय गरी गरिने छ । सो कार्यका लागि विज्ञहरुसंग समन्वय गर्न तथा राय सुझाव लिन सकिनेछ । यो कार्य प्रचलित कानून बमोजिम सेवा प्रदायकबाट समेत सञ्चालन गर्न सकिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.१०,००,०००|- व्यवस्था गरिएको छ । सेवा प्रदायकबाट परामर्श सेवा खरिद गरी कार्यक्रम गर्दा यसमा विनियोजित बजेटको बढीमा ५ प्रतिशत रकम कार्यक्रम सचालनका लागि व्यवस्थापकीय कार्यमा खर्च गर्न सकिनेछ ।

**अपेक्षित उपलब्धि**

वन डढेलो व्यवस्थापन सम्बन्धि तथ्यांक प्राप्त हुने, बन डढेलो नियन्त्रणमा सहयोग पुग्नेछ ।

**१.१९. मानव वन्यजन्तु द्वन्द सम्बन्धि अध्ययन तथा प्रकोपस्थल तथा प्रजाति पहिचान**

यो कार्यक्रममा विनियोजित बजेट मानव वन्यजन्तु द्वन्द सम्वन्धि स्थलगत अध्ययन, सहजीकरण, अभिमुखीकरण, भ्रमण, यातायात, नापजाँच, अनुसन्धान, अन्तरक्रिया, तथ्याँक संकलन लगायतका कार्यमा खर्च गर्न सकिनेछ । यो कार्य सम्पन्न भएपश्चात अध्ययन गरिएका जिल्लाहरुको मानव वन्यजन्तु द्धन्द्धको अवस्था, प्रकोपस्थल, समस्याग्रस्त प्रजाति पहिचान भई प्रतिवेदन तयार हुनेछ । यो कार्य प्रचलित कानून बमोजिम सेवा प्रदायकबाट समेत सञ्चालन गर्न सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

वन तथा भूसंरक्षण विभागका कर्मचारीहरु परिचालन गरि यो कार्यक्रम संचालन गरिने छ । आबस्यक मात्रामा डिभिजन वन कार्यालयहरुसँग समन्वय गरी गरिने छ । सो कार्यका लागि विज्ञहरुसंग समन्वय गर्न तथा राय सुझाव लिन सकिनेछ । यो कार्य प्रचलित कानून बमोजिम सेवा प्रदायकबाट समेत सञ्चालन गर्न सकिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.१०,००,०००।- व्यवस्था गरिएको छ । सेवा प्रदायकबाट परामर्श सेवा खरिद गरी कार्यक्रम गर्दा यसमा विनियोजित बजेटको बढीमा ५ प्रतिशत रकम कार्यक्रम सचालनका लागि व्यवस्थापकीय कार्यमा खर्च गर्न सकिनेछ ।

**अपेक्षित उपलब्धि**

यो कार्य सम्पन्न भएपश्चात अध्ययन गरिएका जिल्लाहरुको मानव वन्यजन्तु द्वन्दको अवस्था, प्रकोपस्थल, समस्याग्रस्त प्रजाति पहिचान भई प्रतिवेदन तयार हुनेछ साथै द्वन्द न्यूनीकरणमा सहयोग पुग्नेछ ।

**१.२०. सिमसारको जैविक विविधता संरक्षण तथा व्यवस्थापन सम्बन्धि अध्ययन गर्ने**

संरक्षित क्षेत्रबाहिर अवस्थित सिमसार क्षत्रहरुको जैविक विविधता संरक्षण तथा व्यवस्थापन सम्बन्धी अध्ययनसँग सम्वन्धित स्थलगत अध्ययन, अनुसन्धान, सहजीकरण, नापजाँच, अन्तरक्रिया, तथ्याँक संकलन लगायत भ्रमण, यातायात, कार्यमा यस शीर्षकको वजेट खर्च गर्न सकिनेछ । यो कार्य सम्पन्न भएपश्चात अध्ययन गरिएका सिमसारक्षेत्रहरुको संरक्षण तथा व्यवस्थापनको अवस्था संबन्धी प्रतिवेदन तयार हुनेछ । यो कार्य प्रचलित कानून बमोजिम सेवा प्रदायकबाट समेत सञ्चालन गर्न सकिनेछ । गत वर्षहरुमा पहिचान तथा सर्वेक्षण गरिएका सिमसार क्षेत्रहरुमा अध्ययनले सिफारिस गरे बमोजिम सिमसार क्षेत्र र त्यहाँका जैविक विविधता संरक्षण र व्यवस्थापनका कार्यहरु संचालन गर्न पनि यस शीर्षकको वजेट खर्च गर्न सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

वन तथा भूसंरक्षण विभागका कर्मचारीहरु परिचालन गरि यो कार्यक्रम संचालन गरिने छ । आबस्यक मात्रामा डिभिजन वन कार्यालयहरुसँग समन्वय गरी कार्य संचालन गरिने छ । सो कार्यका लागि विज्ञहरुसंग समन्वय गर्न तथा राय सुझाव लिन सकिनेछ । यो कार्य प्रचलित कानून बमोजिम सेवा प्रदायकबाट समेत सञ्चालन गर्न सकिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.५,००,०००।- व्यवस्था गरिएको छ । सेवा प्रदायकबाट परामर्श सेवा खरिद गरी कार्यक्रम गर्दा यसमा विनियोजित बजेटको बढीमा ५ प्रतिशत रकम कार्यक्रम सचालनका लागि व्यवस्थापकीय कार्यमा खर्च गर्न सकिनेछ ।

**अपेक्षित उपलब्धि**

- यो कार्य सम्पन्न भएपश्चात अध्ययन गरिएका सिमसारहरुको जैविक विविधताको विवरण प्राप्त हुने ।
- पहिलै पहिचान भएका सिमसार क्षेत्रहरुमा संरक्षण तथा व्यवस्थापन कार्य संचालनमा सहयोग पुग्नेछ ।

**१.२१. विभिन्न राष्ट्रिय पुरस्कारहरु (गणेशमान सिंह सामुदायिक, कवुलियती, निजी, गणेश बहादुर शाहि संरक्षण, साझेदारी वन)**

माथि उल्लेखित राष्ट्रिय पुरस्कारहरु प्रदान गर्नका लागि प्रचलित कार्यविधि बमोजिम व्यक्ति एवं संस्था छनौट गर्नका लागि लाग्ने खर्च (सूचना प्रसारण, विज्ञापन, स्थलगत भ्रमण, बैठक खर्च आदि), पुरस्कृत व्यक्ति, संस्थाको यातायात खर्च, पुरुस्कार वितरण समारोह खर्च, सामुदायिक वन दिवस संचालन, प्रमाणपत्र तयारी र पुरस्कार राशी आदिमा खर्च गर्न सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

वन तथा भूसंरक्षण विभागका कर्मचारीहरु परिचालन गरि यो कार्यक्रम संचालन गरिने छ । आवस्यक मात्रामा डिभिजन वन कार्यालयहरुसँग समन्वय गरी कार्य संचालन गरिने छ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.२०,००,०००।- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- वन संरक्षण तथा व्यवस्थापनमा महत्वपूर्ण योगदान पुर्याउने वन समूहहरु तथा व्यक्तिहरु पुरस्कृत हुने ।

**१.२२. लालीगुराँस तथा विजयसालको योजना कार्यान्वयन**

वन तथा भू-संरक्षण विभागबाट गत आर्थिक वर्षमा स्वीकृत भएका लालीगुराँस तथा विजयसालको योजना कार्यान्वयन गर्नका लागि यो बजेट विनियोजन गरिएको हो । कार्यक्रम विभाजन गरी सम्वन्धित डिभिजन वन कार्यालयहरुसँगको समन्वयमा कार्यक्रम संचालन गरिनेछ ।

**जनशक्ति व्यवस्थापन**

वन तथा भूसंरक्षण विभागले योजनामा उल्लेखित क्रियाकलापहरु डिभिजन वन कार्यालयसँग समन्वय गरी कार्यान्वयन गर्नेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.१५,००,०००।- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- योजनामा उल्लेखित कार्यहरु प्रभावकारी ढंगले कार्यान्वयन हुने ।

## १.२३. अन्य प्रयोजनका लागि भोगाधिकार दिइएको वनक्षेत्र अनुगमन मूल्यांकन

नेपालमा हाल करीव १६ हजार हेक्टर भन्दा बढि वन क्षेत्र विभिन्न आयोजनाहरुले अन्य प्रयोजनका लागि यस विभागबाट विभिन्न मितिमा मन्त्रिपरिषदको निर्णय बमोजिम भोगाधिकार लिई प्रयोग भइरहेको छ । अन्य प्रयोजनमा गएका उक्त वन क्षेत्रहरुको वर्तमान अवस्थाको बारेमा जानकारी लिनका लागि उक्त क्षेत्रहरुको अनुगमन तथा मूल्याकंन गर्ने उद्देश्यले यो कार्यक्रम राखिएको हो । विनियोजित बजेट स्थलगत भ्रमण, यातायात, अन्तरक्रिया, प्रतिवेदन तयारी आदि कार्यमा खर्च गर्न सकिनेछ। अनुगमन तथा मूल्याँकनबाट प्राप्त नतिजाहरु संलग्न गरी आयोजना अनुसारको प्रतिवेदन तयार गरिनेछ ।

**जनशक्ति व्यवस्थापन**

वन तथा भूसंरक्षण विभागले अनुगमन टोली खटाई डिभिजन वन कार्यालयसँग समन्वय गरी यो कार्यक्रम कार्यान्वयन गर्नेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.५०,००,०००।- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- अन्य प्रयोजनका लागि उपलब्ध गराईएका १०० वटा वन क्षेत्रहरुको अवस्थाको विवरण प्राप्त भई अनुगमन तथा मुल्यांकनबाट प्राप्त नतिजा कार्यान्वयन हुने ।
- अन्य प्रयोजनका लागि उपलब्ध गराईएका १०० वटा वन क्षेत्रहरुको अवस्थाको विवरण सहितको पुस्तिका तयार हुने ।

## १.२४. वन अतिक्रमण नियन्त्रण, सहजीकरण र अनुगमन

डिभिजन स्तरमा वन अतिक्रण नियन्त्रण सहजीकरण तथा उक्त कार्यको अनुगमनका लागि यस शिर्षकमा विनियोजित बजेट आवश्यकताका आधारमा इन्धन, यातायात खर्च, दैनिक भ्रमण भत्ता आदिमा खर्च गर्न सकिन्छ ।

**जनशक्ति व्यवस्थापन**

वन तथा भूसंरक्षण विभाग अन्तरगतको कर्मचारिहरुले डिभिजन वन कार्यालयसँग समन्वय गरी यो कार्यक्रम कार्यान्वयन गर्नेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.७,००,०००।- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- विभिन्न क्षेत्रमा अतिक्रमणहरुको व्यवस्थापनमा सहयोग पुग्ने ।

१.२५. सामुदायिक वनमा पर्यापर्यटन तथा उद्यम विकास अनुदान

यसमा विनियोजित बजेट डिभिजन वन कार्यालयले प्रदेश वन निर्देशनालय मार्फत सिफारिस भई आएका सामुदायिक वन उपभोक्ता समूहहरुलाई अनुदान दिइनेछ । सिफारिस भइ अएका सामुदायिक वन उपभोक्ता समूहहरुले यसैसाथ संलग्न अनुसूचि २ बमोजिमको कार्यविधि बमोजिमको प्रकृया पूरा गरेको हुनु पर्नेछ ।

**जनशक्ति व्यवस्थापन**

वन तथा भूसंरक्षण विभाग, प्रदेश वन निर्देशनालय र डिभिजन वन कार्यालयहरु वीच समन्वय गरी यो कार्यक्रम कार्यान्वयन गरिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.१००,००,०००|- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- सिफारीस भई आएका १०० वटा सामुदायिक वनहरुमा पर्यापर्यटन तथा उद्यम विकास सम्बन्धि कार्यक्रम संचालन हुने ।

**१.२६. काष्ठ तथा गैरकाष्ठ वन उद्यम प्रबर्धन विकास, अनुदान**

नेपालको वन क्षेत्रमा वन डढेलो ठूलो समस्याको रुपमा देखिएको छ । वन डढेलोबाट जैविक विविधताको नाश हुने, काठदाउरा लगायत पैदावार नोक्सान हुने र स्थानीय उपभोक्ताको जिउधनमा समेत नकारात्मक असर पर्ने भएकोले यो अनुदान खासगरी वनडढेलो लाई नियन्त्रण गर्ने किसिमका उद्योगलाई प्रदान गर्ने गरी प्राथमिकता गरिएको छ। त्यस्तै उत्सर्जन न्यूनीकरण, स्थानीय रोजगारीका अवसर सिर्जना गर्ने काम गर्ने उद्यम पनि प्राथमिकतामा पर्नेछन् । वन डढेलो को लागि कारकतत्वको रुपमा रहेका सुकेका हाँगाबिँगा, झारपात पतकरहरु व्यवस्थापन गरी वनक्षेत्रलाई स्वच्छ र सफा राख्ने, तिनको उपयोग गरी वायोमास पेलेट बनाई घरायसी तथा औद्योगिक संरचनामा उपयोग गर्ने उद्योगलाई यस वर्ष प्राथमिकताको रुपमा राखि यो अनुदान प्रदान गरिनेछ।

निजी वा संगठित काठ तथा गैह्रकाष्ठ वन उद्यम प्रवर्द्धन अन्तर्गत अनुदान प्रदान गर्दा संवन्धित उद्योगले वन संरक्षण र विकासमा पुर्याउनसक्ने योगदान स्पष्ट हुनुपर्छ । वन क्षेत्रबाट रोजगारी सिर्जना गर्ने अवधारणालाई सहयोग पुर्याउने किसिमको हुनुपर्छ । त्यस्तै काठ वन तथा गैह्रकाष्ठ वन उद्यम प्रवर्द्धन बाट हरितगृह ग्यास उत्सर्जन न्यूनीकरण हुने, स्थानीय समुदाय प्रत्यक्षरुपमा लाभान्वित हुने, वन क्षेत्रको उत्पादकत्व बढ्ने, वनको संरक्षण हुने जस्ता कुरा पनि यकिन हुन सक्नु पर्छ ।

**अनुदान प्रक्रिया**

काठ तथा गैरकाष्ठ वन उद्यम प्रवर्द्धन विकास अनुदान निजी बा संगठित व्यवसायीबाट सञ्चालित उपयुक्तः प्रकृतिको बन उद्यम लाई प्रदान गर्नुपर्ने हुन्छ ।

- विभागले राष्ट्रिय दैनिक पत्रिकामा नियमानुसार सूचना प्रकाशन गरि प्रस्ताव आह्वान गर्ने ।
- इच्छुक व्यवसायी उद्यमी, सहकारीले प्रकाशित सूचना वमोजिम व्यावसायिक योजना सहित, उद्योग स्थापना गर्ने क्षेत्रको चारकिल्ला सहित प्रस्ताव जिल्ला वन कार्यालयमा पेश गर्ने ।
- सार्वजनिक सूचनाको आधारमा प्राप्त भएका प्रस्तावहरुलाई स्वतन्त्र विज्ञ समूह रहेको मूल्याङ्कन टोलीबाट मूल्यांकनको आधारहरु (TOR) बनाई उपयुक्त उद्यमलाई अनुदान उपलब्ध गराउनु पर्नेछ।
- प्रस्तावहरुको मूल्याङ्कन गर्दा कच्चा पदार्थ उपलब्धताको सुनिश्चितता, उत्पादित पैदावारको प्रशोधन, लाभप्रद व्यावसायिक योजना, प्रस्तावकले कुल लगानीको न्यूनतम २० प्रतिशत वा सो भन्दा बढी लगानी गर्ने प्रस्ताव हुनु पर्ने ।

**उद्यम स्थापना र सञ्चालनः**

उद्यम स्थापना तथा सञ्चालनको लागी स्वीकृत लागत ईष्टीमेट तथा डिजाईनबमोजिमको रकम मध्ये सम्वन्धित उद्यमी/संघसस्थाले न्यूनतम ५० प्रतिशत र नेपाल सरकारबाट अधिकतम ५० प्रतिशत रकम अनुदान स्वरुप प्राप्त हुने छ । जग्गा खरिद/ब्यवस्थापन,सञ्चालन खर्चका लागी उद्यमी स्वयंले लगानी गर्नु पर्ने र अनुदानमा प्राप्त भएको रकमबाट मेसीनरी औजार लगायतका बस्तु सेवा खरिद गर्नर प्राप्त हुने अनुदानको बढिमा ५० प्रतिशत रकम भवन निमार्णमा खर्चगर्न सकिने छ । अनुदानमा प्राप्त हुने रकम कार्य प्रगतिको आधारमा समितिबाट सिफारिस भएको आधारमा पहिलो किस्तामा ४० प्रतिशत र दोस्रो किस्तामा ३० प्रतिशत र तेस्रोमा ३० प्रतिशत अनुदान उपलब्ध गराईने छ ।

## अनुगमन मुल्यांकन

क) उद्यमीले अर्ध-वार्षिक कार्य प्रगति विवरण विभागमा पेश गर्नु पर्नेछ ।

ख) विभागले कम्तिमा वार्षिक २ पटक उद्यम स्थापना एंव सञ्चालनको प्रभावकारिता मुल्याँकन गर्ने छ ।

ग) सञ्चालित उद्यमको अवस्था एवं प्रभावकारीता बृद्धिको लागी विभाग, प्रदेश वन निर्देशनालय समय समयमा अनुगमन हुनेछ ।

## विविध

क) प्रस्ताव मुल्यांकन तथा अनुगमन खर्चका लागि वन उद्यम अनुदान रकमको वढिमा १ प्रतिशत रकम छुटाइ खर्च गर्न सक्ने छ ।

ख) काबु बाहिरको परिस्थिती बाहेकको अवस्थमा २ वर्ष भित्र उद्यम सञ्चालन नगरेमा र नियमित रुपमा कम्तीमा ५ वर्ष सम्म उद्योग संचालन नगरेमा अनुदानमा प्राप्त रकम सरकारी बाँकी सरह असुल उपर गरिने छ ।

घ) कार्यक्रम कार्यान्वयनमा कुनै द्धिविधा भएमा वन तथा वातावरण मन्त्रालयले बाधा अड्काउ फुकाउन सक्नेछ ।

**जनशक्ति व्यवस्थापन**

वन तथा भूसंरक्षण विभाग अन्तर्गत एकवटा टोली बनाइ यो कार्यक्रम कार्यान्वयनमा सहजीकरण गरिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.१००,००,०००|- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- एकवटा काष्ठ तथा गैरकाष्ठ वन पैदावारमा आधारित उद्यम स्थापना तथा संचालन भई रोजगारी बृद्धि हुने ।

## आ) प्रदेश मन्त्रालय अन्तर्गत संचालन हुने कार्यक्रमहरु

प्रदेश उधोग, पर्यटन, वन तथा वातावरण मन्त्रालय अन्तरगतका कार्यक्रमहरु प्रदेश वन निर्देशनालय र सम्बन्धित डिभिजन वन कार्यालयहरु मार्फत कार्यान्वयन गरिनेछ :

### १. राष्ट्रिय वन विकास तथा व्यवस्थापन कार्यक्रम (ब.उ.शी.नं. ३२९१०६)

नेपालको वन क्षेत्रको वैज्ञानिक ढंगबाट संरक्षण, विकास र व्यवस्थापन गर्दै काष्ठ र गैरकाष्ठ वन पैदावारको उत्पादकत्व र उत्पादन वढाएर स्थानीय र राष्ट्रिय आवश्यकता परिपूर्ति एवं विदेश निकासी गरी स्थानीय तथा राष्ट्रिय आय बढाउन सकिन्छ । वन संरक्षण र व्यवस्थापनमा जनसहभागिता अभिबृद्धि गरी संरक्षण र विकासलाई प्रभावकारी वनाउनुका साथै यसबाट स्थानीय जनतालाई रोजगारीको अवसरहरु सृजना गरी जीविकोपार्जनमा सुधार ल्याउन योगदान पुर्याउन सकिन्छ । यिनै सम्भावनाहरुलाई मध्येनजर गरी वन तथा भू-संरक्षण विभागको स्थापनासँगै विभिन्न कार्यक्रमहरु कार्यान्वयन गर्दै वनको संरक्षण तथा विकासमा उल्लेखनीय प्रगति हासिल हुँदै आएको छ ।

राष्ट्रिय वन विकास तथा व्यवस्थापन कार्यक्रम वन तथा भू-संरक्षण विभाग अन्तर्गत सरकारद्वारा व्यवस्थित वनका साथै सबै प्रकारका वन व्यवस्थापन पद्धतीमा संचालित छ । यस कार्यक्रम अन्तर्गत मुख्यरुपमा वन तथा जैविक विविधताको संरक्षण, वन संरक्षण, सम्वर्धन तथा व्यवस्थापन र वन पैदावारको सदुपयोग तथा आपूर्तिका कार्यक्रमहरु पर्दछन् । जडीबुटी कार्यक्रम लागू नभएका जिल्लाहरुमा जडीबुटी तथा अन्य गैरकाष्ठ वनपैदावारको संरक्षण तथा व्यवस्थापन समेत यसै कार्यक्रमबाट हुँदै आईरहेको छ । यसै कार्यक्रम मार्फत सवै जिल्लाहरुमा वन कार्ययोजना तयारी तथा अध्यावधिक गरी सोही अनुसारका कृयाकलाप संचालन गरिंदै आएको छ । यस आ.व.मा यो कार्यक्रम अन्तर्गत रु.७०,७२,२८०००।- को बजेट विनियोजन भएको छ ।

#### १.१. वन डढेलो नियन्त्रण तथा व्यवस्थापन योजना कार्यान्वयन

सुख्खा याम अर्थात फाल्गुण-चैत्र देखिनै वनजंगल क्षेत्रमा विभिन्न कारणबाट आगलागी एवं डंढेलोको प्रकोप गम्भीर रुपमा देखापर्दै आएको छ । कतिपय अवस्थामा मानिसको नियन्त्रण भन्दा वाहिर पनि वन डंढेलो प्रकोप देखापर्ने गरेको छ । वन डंढेलोको नियन्त्रण गर्न पंचवर्षीय वन व्यवस्थापन कार्ययोजनामा उल्लेखित Action plan हरु एक मुख्य एउटा आधार हुनेछ ।

आवश्यकतानुसार नजीकका समूहलाई संस्थागत रुपमा जोडी अग्नि नियन्त्रण सञ्जालको रुपमा रुपान्तरण गर्नु पर्दछ । यस शीर्षकमा व्यवस्था भएको रकम नियन्त्रित डढेलो लगाउने, संजाल परिचालन, वनभूमिमा भएको प्रज्वलनशील सुक्खा पदार्थ व्यवस्थापन आदि कामहरुमा खर्च गर्न सकिनेछ । अग्निरेखा निर्माण तथा मंर्मत सुधार, प्रचारप्रसार, जनचेतना अभिवृद्धि, अग्नि नियन्त्रण सञ्जाल, कर्मचारी तथा सुरक्षा निकाय परिचालन (इन्धन, खाजा, खाना, पानी आदि खर्च), डढलो सूचना खरिद, प्राथमिक उपचार, दमकल परिचालन आदि कार्यक्रमहरुमा पनि खर्च गर्न सकिनेछ । वन

डढेलो सम्वन्धी सूचना प्रशारण तथा उपकरण खरिदमा समेत यो रकम खर्च गर्न सकिनेछ । कार्यक्रम सम्पन्न भएपश्चात प्रगति प्रतिवेदन तयार गरी पेश गर्नु पर्नेछ ।

**जनशक्ति व्यवस्थापन-**

डिभिजन तथा सब डिभिजन वन कार्यालयहरुका कर्मचारी मार्फत स्थानिय तह, वन उपभोक्ता समूहहरु, सेना, प्रहरी समेतको सहयोग र सहकार्यमा यो कार्यक्रम संचालन गरिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.२,१७,०००००|- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- ८४ वटा डिभिजन वन कार्यालयहरुले वन डढेलो नियन्त्रण तथा व्यवस्थापन योजना तयार भई कार्यान्वयन हुने ।

**१.२. अग्नी नियन्त्रण सम्बन्धि सामाग्री, उपकरण तथा सामान खरिद तथा वितरण**

वन डढेलो नियन्त्रणको लागि प्रयोग गर्नुपर्ने औजार तथा सामग्रीहरु विशेष किसिमको र अग्नि समन टोली (Fire fighting team) सदस्यहरुले लगाउने वा प्रयोग गर्ने सुरक्षा सामाग्री खरीद गर्नु पर्नेछ । सामग्रीहरु आगोले सजिलै नजल्ने किसिमको हुनु आवश्यक छ । यसको लागि तालिका १ बमोजिमका औजारहरु खरिद गर्न सकिनेछ ।

तालिका नं. १: डढेलो नियन्त्रणका सामग्रीहरु-

| सि.नं. | सामानको नाम |
|---|---|
| १ | Swatter (स्वाटर) |
| २ | Jet Shooter (जेट सुटर) |
| ३ | Shovel (बेल्चा) |
| ४ | Rake (दाँती) |
| ५ | Rake-hoe (दाँती हलो) |
| ६ | Axe-hoe (बन्चरो) |
| ७ | First-aid Kit (प्राथमिक उपचार) |
| ८ | Jump-suit (जम्प शुट) |
| ९ | Gloves (बाक्लो पंजा) |
| १० | Helmet (हेल्मेट) |
| ११ | Boot (जुत्ता) |
| १२ | Torch (टर्च) |
| १३ | Socks (बाक्लो मोजा) |
| १४ | Water Bottle (पानीको बोतल) |
| १५ | Face Mask (अनुहार मास्क) |
| १६ | Water tank (पानी टैंक) |
| १७ | अन्य आवश्यक स्थानीय सामाग्री |

पुनश्चः यो बाहेक मोटर जाने स्थानमा मोटरमा पानी, पानीट्याकी प्रयोग गर्नुपर्नेछ । पम्प र पाइपहरु पनि उपयोगमा ल्याउन सकिन्छ । तर यसको लागि स्रोतको उपलब्धता अनुसार डिभिजन वन कार्यालयले विशेष व्यवस्था गर्न सक्नेछ ।

सम्भव भएसम्म नेपाल गुणस्तर वा अन्तराष्ट्रिय गुणस्तरका सामग्रीहरु भरपर्दो संस्था वा विक्रेताबाट खरिद गर्नुपर्दछ, र सो सम्भव नभएमा स्थानीयस्तरमा उपलव्ध गुणस्तरीय सामानहरु खरिद गर्नुपर्दछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.१,४१,०००००।- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- ८४ वटा डिभिजन वन कार्यालयहरुमा वन डढेलो नियन्त्रण तथा व्यवस्थापनका लागि आवश्यक औजारहरुको व्यवस्था भई डढेलो उचित व्यवस्थापन हुने ।

**१.३. डढेलो नियन्त्रणका लागि सुख्खा वन क्षेत्रमा पानी पोखरी निर्माण तथा ताल तलैया संरक्षण**

डिभिजन वन कार्यालयले डढेलो जोखिम र आवश्यकताको पहिचान गरी सम्भाव्यता र प्राथमिकताको आधारमा सरकारद्वारा व्यवस्थित वन एवं समुदायद्वारा व्यवस्थित (सामुदायिक/ संरक्षित/ साझेदारी/ कवुलियती) वनमा संवन्धित वन कार्यालय एवं समूहमार्फत पोखरी निमार्ण तथा तालतलैया संरक्षण गरिनेछ । निर्माण क्षेत्रको नक्साङ्कन, लगत इस्टिमेट तयार र स्वीकृत गरी उपभोक्ता समूहको योगदानलाई समेत सुनीश्चित गरी पानी पोखरी निर्माण तथा ताल तलैया व्यवस्थापनमा खर्च गर्न सकिनेछ । यसमा विनियोजित बजेटको बढीमा ५ प्रतिशत रकम कार्यक्रम सचालनका लागि व्यवस्थापकीय कार्यमा खर्च गर्न सकिनेछ ।

**१.४. संरक्षित वन प्रबर्धन तथा कार्ययोजना कार्यान्वयन**

संवन्धित संरक्षित वनको स्वीकृत बार्षिक कार्यक्रम अनुसारका कृयाकलापहरु संचालन गर्दा प्रचलित नर्मस्, जिल्ला दररेट, आर्थिक ऐन नियम र यस कार्यविधिमा अन्यत्र उल्लेखित मिल्दाजुल्दा कार्यक्रममा उल्लेख भए बमोजिम कार्यान्वयन गर्नुपर्ने छ ।

संरक्षित वन व्यवस्थापन कार्ययोजनाको कार्यान्वयन स्वीकृत कार्ययोजनाका आधारमा हुनेछ । स्वीकृत कार्यक्रमको विस्तृत कार्यान्वयन योजना सम्बन्धित डिभिजन वन कार्यालय (एकभन्दा बढी जिल्ला ओगटेको संरक्षित वनको हकमा) संग समन्वय गरी कार्यक्रम संचालन गर्नुपर्नेछ । कार्यक्रम सम्पन्न भएपश्चात प्रगति तयार गर्नुपर्नेछ ।

**जनशक्ति व्यवस्थापन**

डिभिजन तथा सब डिभिजन वन कार्यालयहरुका कर्मचारी, संरक्षित वन कार्यक्रमका कर्मचारी, परिषदका सदस्यहरु, स्थानिय तह, वन उपभोक्ता समूहहरु समेतको सहयोग र सहकार्यमा यो कार्यक्रम संचालन गरिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु. ४१,८००००।- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- कार्ययोजना कार्यान्वयन भई जैविक विविधताको संरक्षण र व्यवस्थापनमा प्रभावकारीता बढ्ने।

## १.५. संरक्षित वन संचालन खर्च

स्वीकृत बार्षिक कार्यक्रम अनुसारका कृयाकलापहरु प्रचलित नर्मस, जिल्ला दररेट, आर्थिक ऐन, नियम कार्यविधि उल्लेखित मिल्दाजुल्दा कार्यक्रममा उल्लेख भएको प्रकृया अनुसार कार्यान्वयन गर्नुपर्ने छ ।

**जनशक्ति व्यवस्थापन**

डिभिजन तथा सब डिभिजन वन कार्यालयहरुका कर्मचारी, संरक्षित वन कार्यक्रमका कर्मचारी, परिषदका सदस्यहरु, स्थानिय तह, वन उपभोक्ता समूहहरु समेतको सहयोग र सहकार्यमा यो कार्यक्रम संचालन गरिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.६२,०००००।- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- संरक्षित वनको जैविक विविधताको संरक्षण र व्यवस्थापनमा प्रभावकारीता बढ्ने ।

## १.६. प्रस्तावित संरक्षित वन प्रवर्धन कार्यक्रम

प्रस्तावित संरक्षित वनको योजनामा उल्लेख भए वमोजिमका कार्यक्रमहरु संचालन गरिने छ । मुख्यतया वन, जैविक विविधता तथा वातावरण संरक्षणका लागि स्वीकृत वजेटलाई प्रचलित नर्मस, जिल्ला दररेट, आर्थिक ऐन नियम कार्यविधि वमोजिम खर्च गरिने छ ।

**जनशक्ति व्यवस्थापन**

डिभिजन तथा सब डिभिजन वन कार्यालयहरुका कर्मचारी, संरक्षित वन कार्यक्रमका कर्मचारी, परिषदका सदस्यहरु, स्थानिय तह, वन उपभोक्ता समूहहरु समेतको सहयोग र सहकार्यमा यो कार्यक्रम संचालन गरिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु. १२,०००००।- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- ६ वटा प्रस्तावित संरक्षित वनमा जैविक विविधताको संरक्षण र व्यवस्थापन हुने ।

**१.७. समुदायमा आधारित संरक्षणमुखी वन व्यवस्थापन तथा जैविक विविधता संरक्षण**

सामुदायिक वनको कार्ययोजना परिमार्जन/नविकरण, उपभोक्ता समूह गठन, वन कार्ययोजना तयारी, हस्तान्तरण, नर्सरी मर्मत, विरुवा उत्पादन कार्यक्रमको हकमा माथि संवन्धित शिर्षकमा उल्लेख भए अनुसार गरिनेछ । अन्य कार्यक्रमहरुको हकमा निम्नानुसार हुनेछ ।

क) वृक्षारोपण कोचिङ: यस कार्यक्रममा बिनियोजित रकम वृक्षारोपण कार्यमा स्थलगत रुपमा प्राविधिक सहयोग पुर्याउनको लागि फिल्डमा जाँदा आउँदाको भ्रमण खर्च, दैनिक भक्ता तथा चियाखाजामा खर्च गर्नुपर्ने छ ।

ख) चोरी शिकारी नियन्त्रणका लागि सुराकी परिचालन: कार्यालय प्रमुखले आफुलाई विश्वास लागेका व्यक्तिहरुलाई सुराकीको रुपमा गोप्य रुपमा नियुक्त गरी परिचालन गर्न सक्ने छन् । यस शिर्षकमा बिनियोजित बजेट नियुक्त गरिएका सुराकीहरुलाई आवश्यकता अनुसार पारिश्रमिक दिन खर्च गर्नुपर्ने छ ।

ग) विद्यालय स्तरमा नयाँ इको क्लव गठन, परिचालन र सञ्चालन सहयोग: यस शिर्षकमा बिनियोजित बजेट विद्यालय स्तरमा नयाँ इको क्लव गठन गर्न सहजीकरण गर्दा लाग्ने खर्च जस्तै भ्रमण खर्च, दैनिक भत्ता, चियाखाजा, स्टेशनरी, आदीमा खर्च गरीने छ । साथै वद्ध्यालयका वातावरण शिक्षक मार्फत गठन गरिएका इको क्लव परिचालन गर्न इको क्लवहरुलाई अनुदान सहयोग गर्न समेत यो बजेट खर्च गर्न सकिनेछ । यसका साथै इको क्लवहरुलाई सञ्चालनमा ल्याउन संस्थागत सहयोग अनुदानमा समेत यो बजेट खर्च गर्नुपर्नेछ ।

घ) सामुदायिक वनमा बिपन्न तथा गरीवमुखी आयआर्जन कार्यक्रम सञ्चालन: सामुदायिक वनका गरीव तथा विपन्न घरधुरीहरुले आफुले पहिचान गरेका आयआर्जनका कृयाकलापको योजना तयारी तथा सञ्चालनको लागि यस कार्यक्रममा बिनियोजित बजेट खर्च गर्न वा अनुदान दिन सकिने छ ।

ङ) खाली पर्ति सडक किनारा, सामुदायिक वनमा वृक्षारोपण: स्थानीय समुदायको सहभागितामा समुदायको चाहना अनुरुपका (कार्यक्रममा समावेश भएका) प्रजातीको वृक्षारोपण गर्नको लागि विरुवा खरिद, विरुवा ढुवानी तथा आवश्यकता अनुसार विरुवा रोपण, संरक्षण र स्थलगत प्राविधिक सहयोग पुर्याउन गरीने भ्रमण, दैनिक तथा वैठक भक्ता तथा चियापान आदि कार्यमा यस शिर्षकमा विनियोजित बजेट खर्च गर्नुपर्नेछ ।

च) दिवस समारोह सञ्चालन: कार्यक्रममा समावेश भएका समारोह (जस्तै सामुदायि वन राष्ट्रिय दिवस, वातावरण दिवस आदि) सञ्चालन गर्दा लाग्ने खर्चहरु जस्तै वैठक, ब्यानर तथा प्लेकार्ड तयारी, सम्मान पत्र छपाई, प्रचार प्रसार/माइकिङ, स्टेशनरी तथा समारोहमा सहभागीहरुलाई चियाखाजामा खर्च गर्न सकिने छ । यसका साथै समारोह मनाउनको लागि आवश्यक पर्ने सामग्रीहरु खरिद गर्न समेत यो कार्यक्रममा रहेको रकम खर्च गर्नुपर्नेछ ।

**जनशक्ति व्यवस्थापन**

डिभिजन तथा सब डिभिजन वन कार्यालयहरुका कर्मचारी, संरक्षित वन कार्यक्रमका कर्मचारी, परिषदका सदस्यहरु, स्थानिय तह, वन उपभोक्ता समूहहरु समेतको सहयोग र सहकार्यमा यो कार्यक्रम संचालन गरिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु. ७८,५००००|- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- घोषणा भएका १० वटा संरक्षित वनमा जैविक विविधताको संरक्षण र व्यवस्थापन हुने ।
- गरीबमुखी कार्यक्रमहरु संचालन भई स्थानिय जनताको आयआर्जनमा बृद्धि हुने ।
- बृक्षारोपणले हरियाली प्रवर्धन हुने ।

**१.८. वैकल्पिक उर्जा, पूर्वाधार विकास, संस्कृति संरक्षण, सुशासन एवं क्षमता अभिबृद्धि कार्यक्रम**

स्वीकृत बार्षिक कार्यक्रम अनुसारका कृयाकलापहरु प्रचलित नर्मस, जिल्ला दररेट आर्थिक ऐन, नियम कार्यविधिमा उल्लेखित मिल्दाजुल्दा कार्यक्रममा उल्लेख भएको प्रकृया अनुसार कार्यान्वयन गर्नुपर्नेछ ।

**जनशक्ति व्यवस्थापन**

डिभिजन तथा सब डिभिजन वन कार्यालयहरुका कर्मचारी, संरक्षित वन कार्यक्रमका कर्मचारी, परिषदका सदस्यहरु, स्थानिय तह, वन उपभोक्ता समूहहरु समेतको सहयोग र सहकार्यमा यो कार्यक्रम संचालन गरिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु. २०,०००००|- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- महत्वपूर्ण २ वटा संरक्षित वनमा जैविक विविधताको संरक्षण र व्यवस्थापन हुने ।

**१.९. पंचासे क्षेत्रको उपजलाधार व्यवस्थापन कार्ययोजना कार्यान्वयन**

स्वीकृत वार्षिक कार्यक्रमको वजेट वांडफाँडको स्वीकृत डिभिजन वन अधिकृतवाट गराई कार्ययोजना वमोजिमको कार्यक्रम प्रचलित नमर्स तथा आर्थिक कार्यविधि अनुसार संचालन गरिनेछ । कार्य संचालन सम्वन्धित डिभिजन वन कार्यालयहरु, स्थानिय तहहरु, भूसंरक्षण सँग संवन्धित इकाइहरु तथा अन्य सरोकारवाला संघसंस्थाहरुको समन्वय तथा सहकार्यमा गरिनेछ । यसका पुरै वा आंशिक कार्यक्रमहरु सेवाप्रदायकहरुबाट समेत गर्न सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

डिभिजन तथा सब डिभिजन वन कार्यालयहरुका कर्मचारी, पञ्चासे संरक्षित वन कार्यक्रमका कर्मचारी, परिषदका सदस्यहरु, स्थानिय तह, वन उपभोक्ता समूहहरु समेतको सहयोग र सहकार्यमा यो कार्यक्रम संचालन गरिनेछ ।

बजेट व्यवस्थापन

यो कार्यक्रमको लागि वजेट रु. ३०,०००००।- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- पञ्चासे संरक्षित वनको जैविक विविधताको संरक्षण र व्यवस्थापन हुने ।
- कार्ययोजना बमोजिमका गरीबमूखी लगायतका कार्यक्रमहरु संचालन भइ जनसहभागितामा बृद्धि हुने ।

**१.१०. वन अतिक्रमण हटाई व्यवस्थापन**

अतिक्रमित वन क्षेत्रबाट अतिक्रमण गर्ने व्यक्तिहरुलाई हटाई पुनः वन क्षेत्र कायम गर्नु पर्नेछ । विभिन्न जिल्लाबाट विभागमा प्राप्त अतिक्रमणको तथ्याङकको आधारमा क्षमता र श्रोत साधनको व्यवस्थापनलाई सशक्तिकरण गर्न यो कार्यक्रम संचालन गरिनेछ । अतिक्रमण हटाई नियन्त्रणमा लिइएको खाली जग्गामा सकभर सहभागितामूलक ढंगले संरक्षण तथा वन विकासका कार्यक्रमहरु संचालन गर्न सकिनेछ ।

आकस्मिक रुपमा अतिक्रमण हटाउन वा अतिक्रमण हटाई सकिएको स्थान त्यसै छाडिदिंदा पुन अतिक्रमण हुनसक्ने भएकोले पुन: अतिक्रमण नहुने गरी संरक्षण गर्नुपर्नेछ । यस शीर्षकमा विनियोजन भएको बजेट रकमबाट अतिक्रमण हटाउने, तारबार लगाउने, वृक्षारोपण, आवश्यकतानुसार रोपिएका विरुवाहरुको संरक्षणका लागि हेरालुको समेत व्यवस्था गर्नुपर्नेछ काममा खर्च गर्नुपर्नेछ । त्यस्ता क्षेत्रहरुमा आवश्यकतानुसार तारवार, वृक्षारोपण गरी कार्यक्रम संचालन गर्नुपर्नेछ । अतिक्रमण हटाउनको लागि जनशक्ति (सुरक्षाकर्मी, कर्मचारी, समुदाय आदि) परिचालन गर्नुपर्ने भएमा सोको लागि खाना, खाजा, यातायात, ईन्धन खर्च, संचार र उपचार खर्चको लागि समेत खर्च गर्न सकिनेछ। अतिक्रमण हटाई वृक्षारोपण गरिएको ठाउँमा अतिक्रमित क्षेत्र खाली गरिएको मिति, क्षेत्रफल, नक्शा, तुलनात्मक फोटो, GIS नक्शा समेत संलग्न राखी प्रतिवेदन तयार गर्नुपर्नेछ । वन अतिक्रमण हटाउंदा विशेष गरी निम्न कुराहरुमा ध्यान दिनुपर्नेछ :

(१) पूर्व तयारी कार्यक्रम: लगत अध्यावधिक तथा योजना तयार, कार्यदलको बैठक संचालन, जनचेतनामूलक सन्देश प्रशारण तथा प्रकाशन, फिल्डस्तरीय अन्तरक्रिया आदि ।

(२) अतिक्रमण नियन्त्रण: समन्वय, सूचना प्रकाशन, लजिस्टिक सहयोग, सवारी भाडा (ट्र्याक्टर, बुल्डोजर समेत) प्राथमिक उपचार, इन्धन, बिमा आदि ।

(३) पुर्नस्थापना: योजना तयारी, विरुवाको व्यवस्था तथा वृक्षारोपण, तारवार, सिमाना, हेरालु व्यवस्था आदि ।

**जनशक्ति व्यवस्थापन**

डिभिजन तथा सब डिभिजन वन कार्यालयहरुका कर्मचारी, वन उपभोक्ता समूह तथा सरोकारवाला निकायहरु, स्थानिय तह समेतको सहयोग र सहकार्यमा यो कार्यक्रम संचालन गरिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु. २,८६,५००००।- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- कम्तिमा ५७३ हे. अतिक्रमित वन क्षेत्र राष्ट्रिय वनमा समाहित भई उचित व्यवस्थापन हुने ।

### १.११. ढलापडा काठ दाउरा संकलन तथा व्यवस्थापन

यो कार्यक्रम तराई तथा भित्री मधेशका डिभिजन वन कार्यालयहरुमा संचालन हुनेछ । सरकारद्वार व्यवस्थित वनमा हावाहुरी वा अन्य कारणले ढलेका रुखहरुलाई तत्कालै संकलन तथा घाटगद्दी गर्नुपर्नेछ । यसरी काठ दाउरा संकलन गर्दा अन्य रुखहरुलाई असर नपर्ने गरी वन पैदावार (काठ/दाउरा) संकलन तथा बिक्री वितरण निर्देशिका, २०७३ अनुसार गर्नुपर्नेछ । घाटगद्दी जंगल क्षेत्र भन्दा बाहिर गर्नुपर्नेछ । रुखहरु अकस्मात ढली बाटो अवरुद्ध लगायत धनजनको क्षति हुने अवस्था आएमा जुनसुकै महिनामा पनि संकलन गर्न सकिने छ ।

संकलित काठदाउराको घाटगद्दी गर्दा सुरक्षाको यथोचित व्यवस्था मिलाई आगलागी, खोलानालाको बाढीले प्रभाव पार्न नसक्ने स्थान छनौट गर्नुपर्दछ । ढलापडाको अवस्था, छपानदेखि कटान-मुछान घाटगद्दीको अवस्थासम्म निरन्तर अनुगमनको प्रवन्ध डिभिजन वन कार्यालयले मिलाउनुपर्नेछ र समय समयमा निर्देशनालय/विभागमा प्रतिवेदन प्रस्तुत गर्नुपर्नेछ । यो शिर्षकमा विनियोजित रकम सूचना प्रकाशन, छपान, कटानमुछान, ढुवानी, लोड, अनलोड, पाईलिङ आदि कार्यमा प्रचलित नर्मस् एवं जिल्ला दररेट वमोजिम खर्च गर्नुपर्ने छ ।

**जनशक्ति व्यवस्थापन**

डिभिजन तथा सब डिभिजन वन कार्यालयहरुका कर्मचारी सरोकारवाला निकायहरु समेतको सहयोग र सहकार्यमा यो कार्यक्रम संचालन गरिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु. ३,४३,४८०००।- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

कम्तिमा २३०००० क्यू. फि. ढलापडा काठदाउरा संकलन भई काठदाउरा आपुर्तिमा सहजता हुने ।

### १.१२. सरकारद्वारा व्यवस्थित (चक्ला वन) व्यवस्थापन कार्ययोजना कार्यान्वयन

सरकारद्धारा व्यवस्थित चक्ला वनहरुमा वैज्ञानिक वन व्यवस्थापन कार्यविधि २०७१, स्वीकृत कार्ययोजना तथा प्रचलित नर्मस् वमोजिम संचालन गर्नुपर्नेछ । स्वीकृत चक्ला वन व्यवस्थापन कार्ययोजनाको आधारमा विनियोजित बजेटको सीमा भित्र रही विस्तृत कार्यक्रम तयार गरी एक तह माथिबाट स्वीकृत गराई कार्यान्वयन गर्नुपर्नेछ । चक्ला वन व्यवस्थापन गर्दा कार्ययोजनामा लेखिएको

समयसिमा भित्र कार्य सम्पन्न गर्नु पर्दछ । चक्ला वनमा योजना गरिएका कार्यक्रम, बजेट, नक्शा सबै खुल्ने गरी साइनबोर्ड बनाई सबैले देख्ने स्थानमा राख्नु पर्दछ । यसका सम्पूर्ण वा आंशिक कार्यक्रम सेवा प्रदायक तथा ठेक्का प्रथाबाट समेत गर्न सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

डिभिजन तथा सब डिभिजन वन कार्यालयहरुका कर्मचारी लगाएत सेवा खरीद गरी यो कार्यक्रम संचालन गरिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु. ४००००००० |- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- ६ वटा सरकारद्वारा व्यवस्थित चक्ला वन व्यवस्थापन भइ काठदाउराको उत्पादन तथा स्थानिय रोजगारी र राष्ट्रिय आयमा समेत टेवा पुग्ने ।

**१.१३. सल्लेरी वन व्यवस्थापन कार्ययोजना कार्यान्वयन**

सल्लेरी वन व्यवस्थापन कार्ययोजना कार्यान्वयन वैज्ञानिक वन व्यवस्थापन कार्यविधि २०७१, स्वीकृत कार्ययोजना तथा प्रचलित नर्मस् वमोजिम संचालन गर्नु पर्नेछ । स्वीकृत सल्लेरी वन व्यवस्थापन कार्ययोजनाको आधारमा विनियोजित बजेटको सीमा भित्र रही विस्तृत कार्यक्रम तयार गरी एक तह माथिबाट स्वीकृत गराई कार्यान्वयन गर्नुपर्नेछ । सल्लेरी वन व्यवस्थापन गर्दा कार्ययोजनामा लेखिएको समयसिमा भित्र कार्य सम्पन्न गर्नु पर्दछ । योजना गरिएका कार्यक्रम, बजेट, नक्सा सबै खुल्ने गरी साइनवोर्ड बनाई सबैले देख्ने स्थानमा राख्नु पर्दछ । यसका सम्पूर्ण वा आंशिक कार्यक्रम सेवा प्रदायक तथा ठेक्का प्रथाबाट समेत गर्न सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

डिभिजन तथा सब डिभिजन वन कार्यालयहरुका कर्मचारी लगाएत सेवा खरीद गरी यो कार्यक्रम संचालन गरिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु. २२०००००|- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- सल्लेरी वन व्यवस्थापन भइ काठदाउराको उत्पादन तथा स्थानिय रोजगारी र राष्ट्रिय आयमा समेत टेवा पुग्ने ।

### १.१४. साझेदारी वन व्यवस्थापन (वैज्ञानिक वन व्यवस्थापन, कार्ययोजना कार्यान्वयन)

साझेदारी वन कार्ययोजना तयारी, सघन वैज्ञानिक वन व्यवस्थापन कार्ययोजना कार्यान्वयन कार्यका लागि वन सम्वर्धन, संरक्षण, वन विकास कार्य, कार्यालय संचालन, अनुगमन निरीक्षण, क्षमता विकास, बैठक, गोष्ठी, अवलोकन भ्रमण आदि कार्य वैज्ञानिक वन व्यवस्थापन कार्यविधि २०७१, स्वीकृत वन व्यवस्थापन योजना तथा प्रचलित नमर्स अनुसार गर्नुपर्नेछ।

स्वीकृत वार्षिक बजेटको परिधि भित्र रही साझेदारी वन व्यवस्थापन कार्ययोजनाको आधारमा कार्यान्वयन इकाईले वार्षिक कार्यक्रम तयार गर्नु पर्ने छ । यसरी तयार भएको कार्यक्रम समितिको बैठकबाट पास गरी डिभिजन वन अधिकृतबाट स्वीकृत गराएर लागु गरिनेछ ! स्वीकृत बजेट सम्बन्धि साझेदारी वन उपभोक्ता समूहको खातामा जम्मा गरी कार्यक्रम कार्यान्वयन गरिने छ । बजेट खर्च तथा कार्यक्रमको प्रगति सहितको प्रतिवेदन समूहले डिभिजन वन कार्यालयमा नियमित रुपमा पेश गर्नु पर्ने छ । कार्यक्रम कार्यान्वयन समूहबाट, वन कर्मचारी वा सेवा प्रदायक तथा ठेक्का प्रथाबाट समेत गर्न सकिनेछ ।

#### जनशक्ति व्यवस्थापन

डिभिजन तथा सब डिभिजन वन कार्यालयहरुका कर्मचारी, साझेदारी वन व्यवस्थापन समूह/समिति, स्थानिय तह लगाएत अन्य सरोकारवालाहरु । यो कार्य सेवा खरीद गरी पनि संचालन गर्न सकिनेछ ।

#### बजेट व्यवस्थापन

यो कार्यक्रमको लागि वजेट रु. १३,५०,०००००|- व्यवस्था गरिएको छ ।

#### अपेक्षित उपलब्धि

- ३० वटा साझेदारी वन व्यवस्थापन भइ काठदाउराको उत्पादन तथा स्थानिय रोजगारी र राष्ट्रिय आयमा समेत टेवा पुग्ने ।

### १.१५. सिमसार क्षेत्रको संरक्षण तथा व्यवस्थापन

जिल्लाको वनक्षेत्रमा रहेका महत्वपूर्ण सिमसार क्षेत्रको संरक्षण तथा व्यवस्थापनका लागि यो रकम खर्च गरिनेछ । सिमसार क्षेत्र व्यवस्थापनका लागि राष्ट्रिय सिमसार नीति, २०६९ ले अवलम्वन गरेका विषयबस्तु अनुसार हुनुपर्दछ । यो कार्यक्रम अमानतबाट, उपभोक्ता समूहबाट वा सार्वनजिक खरिद ऐन, २०६३ र नियमावली २०६४ अनुसार सेवा प्रदायकबाट संचालन गर्न समेत सकिनेछ । व्यस्थापन गरिने सिमसार क्षेत्रको लागत अनुमान डिभिजन वन अधिकृतबाट स्वीकृत गरी सोही अनुसारका कार्यक्रम संचालन गर्नु पर्नेछ । यसमा विनियोजित वजेटको बढिमा ५ प्रतिशत रकम कार्यक्रम संचालनका लागि व्यवस्थापकीय कार्यमा खर्च गर्न सकिनेछ ।

जनशक्ति व्यवस्थापन

डिभिजन तथा सब डिभिजन वन कार्यालयहरुका कर्मचारी, समूह/समिति, स्थानिय तह लगाएत अन्य सरोकारवालाहरुसँगको समन्वयमा तथा सेवाप्रदायकवाट समेत कार्य संचालन गर्न सकिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु. १,५६,६००००|- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- न्यूनतम ८० वटा सिमसार क्षेत्र संरक्षण तथा व्यवस्थापन भइ जैविक विविधताको संरक्षण तथा स्थानिय रोजगारीमा बढोत्तरी हुने ।

**१.१६. आखेटोपहार भण्डारण**

विभिन्न जनावरको छाला, बाघको बंगारा, हात्तीको दाह्रा, गैंडाको सिंग, खुर, कस्तुरीको विणा, भालुको पित्त, अंजिगरको छाला, मृगहरुको सिंग आदि अव्यवस्थित एवं असुरक्षित अवस्थामा रहेकोले त्यसको समुचित व्यवस्थापन गर्न यो कार्यक्रम गर्नु परेको हो । यो शीर्षकमा विनियोजित बजेट रकमबाट आखेटोपहार भण्डारणको सरसफाई, आखेटोपहार नसड्ने र गन्ध आउन नदिने रसायन खरिद, आवश्यकतानुसार आखेटोपहारको प्रशोधन, सुरक्षा व्यवस्था चुस्त र सबल बनाउन सेफ तथा दराज, र्याकको व्यवस्था, कोडिङ आदि कार्यमा खर्च गर्न सकिनेछ । आखेटोपहार भण्डारणको अवस्था र प्राप्त प्रगतिबारे नियमित प्रतिवेदन निर्देशनालय, विभाग पठाउनुपर्नेछ । यो कार्यक्रम सेवा प्रदायकवाट गर्न सकिने छैन ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.२०००००|- व्यवस्था गरिएको छ ।

**१.१७. हात हतियार मर्मत तथा सुधार**

शसस्त्र वन रक्षकहरुले प्रयोग गर्ने हातहतियार, गोलीगठ्ठा, खरखजानाको नियमित मर्मत, सुधार गर्नुपर्ने हुन्छ । हातहतियार पुरानो भई मर्मत गर्नु पर्ने भएमा हातहतियार सम्बन्धि नेपालको प्रचलित कानून बमोजिम मर्मत तथा सुधार गर्न यस शिर्षकमा विनियोजित बजेट खर्च गर्न सकिनेछ । डिभिजन वन कार्यालयहरु र सशस्त्र वन रक्षक तालिम केन्द्र, व्यारेकहरुले यसमा विनियोजित रकम खर्च गर्न सक्नेछन् ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.३०००००|- व्यवस्था गरिएको छ ।

**१.१८. सशस्त्र वन रक्षक क्याम्प स्थापना र व्यवस्थापन (प्रदेश ६ बाहेक)**

विशेष गरी तराई तथा भित्री मधेशका जिल्लामा कार्यरत रहेका सशस्त्र वन रक्षकहरुको व्यवस्थापनका लागि प्रदेश अनुसार क्याम्प स्थापना तथा व्यवस्थापन गर्ने उद्देश्यले यो कार्यक्रम राखिएको हो । यस कार्यक्रममा विनियोजित रकम-त्यस्तो क्याम्पहरुको भौतिक पूर्वाधार निमार्ण तथा सुधार र अन्य फर्निचर, मसलन्द आदि लगायतका कार्यमा खर्च गर्न सकिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.६००००००।- व्यवस्था गरिएको छ ।

**१.१९. पंचवर्षिय योजना तयारी IEE समेत**

वन ऐन २०४९ तथा वन नियमावली २०५१ मा उल्लेख भएबमोजिम वन विकास, सदुपयोग तथा संरक्षण कार्यक्रम संचालन गर्दा वन कार्ययोजना तयार गर्नुपर्ने व्यवस्था रहेको छ । सोही प्रावधान अनुरुप डिभिजन वन कार्यालयहरुले पाँच वर्षका लागि वन कार्ययोजना तयार गर्नु पर्दछ । पाँच वर्षको म्याद सकिएका कार्ययोजनालाई पुनः अध्यावधिक गर्न यो कार्यक्रमको व्यवस्था गरिएको छ । व्यवस्थापन योजना तयार गर्न वन क्षेत्रका विभिन्न कार्ययोजना निर्माण प्रक्रियासंग सम्वन्धित विभागबाट पारित विषयसूची Terms of Reference (TOR) अन्तर्गत डिभिजनको पञ्चवर्षीय वन व्यवस्थापन कार्ययोजना तयार गर्नको लागि कार्यसूची २०७० (मिति ०७०/३/५ मा विभागबाट संशोधित) बमोजिम गर्नुपर्नेछ । प्रारम्भिक वातावरणीय परीक्षण प्रतिवेदन (IEE) पनि कार्ययोजना पूर्व स्वीकृत गराउनु पर्ने व्यवस्था भएकोले विद्यमान वातावरण ऐन, नियमावली अनुसार प्रतिवेदन तयार गर्नुपर्नेछ ।

कार्ययोजना तयारीका लागि व्यवस्था भएको बजेटबाट सूचना प्रकाशन, सरोकारवालासंग छलफल, अन्तरकृया, श्रोत सर्वेक्षण, अति आवश्यक फिल्ड सामाग्री खरिद, स्टेशनरी, नक्सा फोटो खरिद, टाइपिङ प्रिन्टिङ, IEE तयारीका कार्य, विभागमा हुने पुनरावलोकन तथा समिक्षालगायतमा खर्च गर्नु पर्नेछ । जिल्ला/डिभिजनबाट तयार भएको कार्ययोजना र प्रारम्भिक वातावरणीय परीक्षण प्रतिवेदन (IEE को प्रारम्भिक मस्यौदा विभागमा पेश गर्नु पर्नेछ । मस्यौदा प्रति अध्ययन गरी थप संशोधन गर्नुपर्ने विषय समावेश गर्न विभागबाट जानकारी गराइने छ । दोश्रो मस्यौदामा विभागमा वन विज्ञ समक्ष डिभिजनल वन अधिकृत स्वयमले प्रस्तुति गर्नुपर्नेछ । प्रस्तुतिका दौरान वन विज्ञहरुले उठाउनु भएको विषयवस्तुका आधारमा अन्तिम मस्यौदा पेश भएपछि कार्ययोजना स्वीकृति तर्फ कारवाही हुनेछ ।

**जनशक्ति व्यवस्थापन**

डिभिजन तथा सब डिभिजन वन कार्यालयहरुका कर्मचारी, समूह/समिति, स्थानिय तह लगाएत अन्य सरोकारवालाहरुसँगको समन्वयमा तथा सेवाप्रदायकवाट समेत कार्य संचालन गर्न सकिनेछ ।

### बजेट व्यवस्थापन

यो कार्यक्रमको लागि वजेट रु.२४०००००।- व्यवस्था गरिएको छ । सेवाप्रदायकबाट काम गर्दा विनियोजित बजेटको बढीमा ५ प्रतिशत रकम कार्यक्रम सचालनका लागि डिभिजन वन कार्यालयले व्यवस्थापकीय कार्यमा खर्च गर्न सक्नेछ ।

### अपेक्षित उपलब्धि

- ८ वटा पञ्चवर्षिय कार्ययोजनाहरुको IEE तयार भई कार्यान्वयनमा जनेछ ।

## १.२०. पश्चिम पहाड भूपरिधि नमूना कार्यक्रम

नेपालको पश्चिम पहाडी क्षेत्रका दुर्गम तथा पिछडिएको क्षेत्रहरु विशेष गरी रोल्पा, सल्यान, जाजरकोट, रुकुम, अछाम, दैलेख, जुम्ला, हुम्ला, कालिकोट, डोल्पा, मुगु लगायतका जिल्लाहरु समेतमा भू-परिधि स्तरमा जैविक विविधताको संरक्षण र व्यवस्थापनको साथै आय आर्जनका क्रियाकलापहरुलाई हरित रोजगारीको रुपमा प्रवर्धन गर्न आवश्यक भएकोले निम्नानुसारको कार्यहरु संचालन गर्न यसमा विनियोजित रकम खर्च गरिने छ । साथै वन तथा भू-संरक्षण विभागवाट सम्पन्न गरिएको पश्चिम पहाड भू-परिधि स्तरीय कार्यक्रमको संभाब्यता अध्ययनले सुझाएका कार्यहरु संचालन गर्न सकिनेछ ।

क) जैविक विंविधता संरक्षण एवं पर्यापर्यटन प्रवर्धन ।
ख) कृषि वन प्रवर्धन तथा वागवानी विकास ।
ग) वन संरक्षण तथा वन व्यवस्थापन ।
घ) आय आर्जन, वित्तिय व्यवस्थापन तथा उद्यम विकास ।
ङ) भूपरिधि स्तरको कार्ययोजना तयार
च) व्यवस्थापन तथा समन्वय.

### जनशक्ति व्यवस्थापन.

डिभिजन तथा सब डिभिजन वन कार्यालयहरुका कर्मचारी, समूह/समिति, स्थानिय तह लगाएत अन्य सरोकारवालाहरुसँगको समन्वयमा तथा सेवाप्रदायकवाट समेत कार्य संचालन गर्न सकिनेछ ।

### बजेट व्यवस्थापन

यो कार्यक्रमको लागि वजेट रु.१५००००००।- व्यवस्था गरिएको छ । सेवाप्रदायकबाट काम गर्दा विनियोजित बजेटको बढीमा ५ प्रतिशत रकम कार्यक्रम सचालनका लागि डिभिजन वन कार्यालयले व्यवस्थापकीय कार्यमा खर्च गर्न सक्नेछ ।

### अपेक्षित उपलब्धि

- १५ डिभिजन वन कार्यालयको क्षेत्रमा कार्य संचालन भई जैविक विविधता संरक्षण तथा पर्यापर्यटनको पूर्वाधारमा विकास भई स्थानिय रोजगारीमा बृद्धि हुने ।

**१.२१. अतिक्रमण तथा चोरी निकासी नियन्त्रणका लागि गस्ती परिचालन**

यस शीर्षकमा बिनियोजित रकम जिल्लास्तरमा अतिक्रमण तथा चोरी निकासी नियन्त्रणका लागि कर्मचारी तथा सुरक्षा निकाय परिचालन गर्न, इन्धन, खाजा, खाना, यातायात खर्च, दैनिक भ्रमण भत्ता, फिल्ड गियर (जुत्ता, टर्च, तुम्लेट), संचार, सूचना खरिद आदिमा खर्च गर्न सकिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.३२०००००।- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- अतिक्रमण तथा चोरीनिकासि नियन्त्रणमा सहयोग पुगी वनक्षेत्रको संरक्षण हुने ।

**१.२२. समन्वय बैठक (अतिक्रमण नियन्त्रण समन्वय समिति/वन क्षेत्र समन्वय समिति/ WCCCB/ अन्य समन्वय बैठक वा संस्थागत विकास गर्नुपर्नेछ )**

वन अतिक्रमण नियन्त्रण रणनीति, २०६८ बमोजिम अतिक्रमण नियन्त्रण समन्वय समिति, सुरक्षा निकाय बैठक तथा अन्य संस्थागत समन्वय र सरोकारवालासंग गरिने अन्तरक्रिया वैठकहरुमा यस शीर्षकको वजेट खर्च गर्नुपर्नेछ । अन्य बैठकको हकमा सम्बन्धित निर्देशिका अनुसार हुने । बैठक भत्ता, खाजा, संचार, स्टेशनरीमा खर्च गर्न सकिने छ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.७०५०००००।- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- सरोकारवालाहरु वीच समन्वय र सहकार्य भइ कार्य प्रभावकारीतामा बृद्धि हुने ।

**१.२३. सशस्त्र वन रक्षक तालिम/रिफ्रेशर**

सशस्त्र वन रक्षकहरुका लागि रिफ्रेशर (पुर्नताजगी) तालिम संचालनका लागि विस्तृत सत्र योजना तथा लागत अनुमान स्वीकृत गराई कार्य संचालन गरिने छ । यसमा विनियोजित रकम तालिम सामाग्री खरिद, तालिमका सहभागीहरुको दैनिक भत्ता, यातायात, हल भाडा, प्रशिक्षक भत्ता, उद्घाटन तथा समापन कार्यक्रम लगायतका विभिन्न शिर्षकमा स्वीकृत लगत इष्टिमेट अनुसार खर्च गर्न सकिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.६०७०००।- व्यवस्था गरिएको छ ।

### १.२४. वन अपराधको सूचना संकलन

यस शीर्षकमा बिनियोजित रकम जिल्लास्तरमा हुने विभिन्न वन अपराध जस्तै: वन अतिक्रमण, चोरी शिकार तथा चोरी निकासी जस्ता अपराध र त्यस्ता कार्यमा संलग्न अपराधीहरुको सूचना संकलनका लागि प्रयोग गर्नुपर्नेछ । यसबाट इन्धन, खाजा, यातायात खर्च, सुराकि खर्च, सूचना खरिद तथा सुरक्षा निकायहरु सँग समन्वय, र अन्य स्रोतबाट इन्टिलिजेन्स सूचना प्राप्ति आदिमा खर्च गर्न सकिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.३०४००००।- व्यवस्था गरिएको छ ।

### १.२५. सहभागितामूलक अतिक्रमण, चोरी कटानी तथा चोरी शिकारी नियन्त्रण

जिल्लामा स्थानीय जनता तथा अन्य निकायको सहभागितामा अतिक्रमण, चोरी कटानी तथा चोरी शिकारी नियन्त्रण गर्नका लागि अन्तरक्रिया तथा फिल्ड भ्रमणमा यो शिर्षकमा विनियोजित बजेटबाट खर्च गर्न सकिनेछ ।

यसमा विनियोजित रकम कर्मचारी तथा सुरक्षा निकाय एवं स्थानीय समुदाय परिचालन गर्दा आवश्यक पर्ने दैनिक भ्रमण भत्ता, यातायात, इन्धन, फिल्ड गियर, बिमा, प्राथमिक उपचार आदि कार्यमा समेत खर्च गर्न सकिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.७०५००००।- व्यवस्था गरिएको छ ।

### १.२६. वन तथा वन्यजन्तु सम्बन्धि मुद्दाको अनुसन्धान, तहकीकात र मुद्दा दायरी

वन जंगल नोक्सान गर्ने, वन अपराध जस्तै चोरी कटानी, वन्यजन्तु शिकार तथा आखेटोपहार ओसारपोसारमा संलग्न व्यक्ति तथा संस्थाहरुलाई पक्राउ गरी कारवाही गर्न मुद्दा दायर गर्नका लागि आवश्यक पर्ने मसलन्द खर्च, वन अपराधीलाई पक्राउ गरी ल्याउन लैजान सवारी भाडा, सुराकी खर्च, अनुसन्धान खर्च, साक्षी बकाउंदा लाग्ने खर्च, सूचना प्रशारण खर्च, वकिलसंग परामर्श गर्न जाँदा-आउँदा खाजा जस्ता आर्थिक व्ययभार पर्ने खर्चमा यस शीर्षकमा विनियोजित रकम खर्च गर्न सकिनेछ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.७०५००००।- व्यवस्था गरिएको छ ।

### १.२७. मानव वन्यजन्तु द्वन्द व्यवस्थापन तथा वन्यजन्तु उद्धार

यस शीर्षकमा विनियोजन भएको रकम स्थानीय स्तरमा मानव वन्यजन्तु द्वन्द संबन्धमा सतर्कता सम्बन्धी सूचना प्रसारण, वन्यजन्तुको उद्धार, तथा आतंक नियन्त्रण सामाग्रीको व्यवस्थापन, राहत आदिमा खर्च गर्न सकिने छ । यसमा विनियोजित रकम वन्यजन्तुको उद्धार आदि कार्यका लागि

कर्मचारी तथा सुरक्षा निकाय परिचालन गर्दा आवश्यक पर्ने दैनिक भ्रमण भत्ता, यातायात खर्च, खाजा खाना खर्च आदिमा समेत खर्च गर्न सकिनेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.७८,४३०००।- व्यवस्था गरिएको छ ।

**१.२८. वैज्ञानिक वन व्यवस्थापन तालिम**

वैज्ञानिक वन व्यवस्थापन तालिम सञ्चालन गर्दा प्रचलित नर्मस् अनुसार गर्नुपर्ने छ । यस शीर्षकमा बिनियोजित रकम तालिम सामाग्री खरिद, तालिमका सहभागीहरुको दैनिक भत्ता, यातायात, हल भाडा, प्रशिक्षक भता, फिल्ड गियर, तालिम पश्चात कार्यक्रम संचालनका लागि शुरुवाती भौतिक सामाग्री एवं औजार खरिद तथा हस्तान्तरण र उद्घाट्न तथा समापन कार्यक्रम लगायतका विभिन्न शिर्षकमा स्वीकृत लगत इष्टिमेट अनुसार खर्च गर्न सकिनेछ ।

तालिम संचालन भए पश्चात स्थान र मिति देखिने तालिमको फोटो,दृष्यहरु समावेश गरी प्रतिवेदन अनिवार्य रुपले तयार गर्नुपर्नेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.६९०००००।- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- २३ वटा तालिम संचालन भइ फिल्डमा कार्यरत प्राविधिक तथा समूह सदस्यहरुको दक्षता अभिबृद्धि हुने ।
- वैज्ञानिक वन व्यवस्थापनमा प्रभावकारीता वढ्ने ।

**१.२९. लग यार्ड निर्माण (नवलपरासी, कैलाली,मोरङ्ग)**

साझेदारी वन, चक्ला वन तथा अन्य सरकारी वनको व्यवस्थापनबाट उत्पादन भएका काठदाउरा सुरक्षितसाथ राख्न र विक्री वितरण प्रक्रियालाई सहज बनाउनका लागि पायक पर्ने स्थानमा डिभिजन वन कार्यालयले नेपाल सरकारको प्रचलित कानून अनुसार लग यार्ड निर्माण गर्नमा यो शीर्षकको वजेट खर्च गर्न सकिने छ । कार्यक्रममा **नवलपरासी, कैलाली,मोरङ्ग** लेखिएको भएता पनि कर्णाली प्रदेशको हकमा वैज्ञानिक वन व्यवस्थापन भइ काठ उत्पादन हुने डिभिजन कार्यालयको क्षेत्रमा लग यार्ड निर्माण गर्नु पर्नेछ । कार्यक्रम सम्पन्न पश्चात तपशिल बमोजिमका विवरणहरु समावेश गर्नु पर्नेछ ।

- कार्यक्रम संचालन भएको स्थान
- कार्यक्रमको संख्यात्मक भौतिक प्रगति र भारित प्रगति
- मुख्य उपलब्धीहरु
- कार्यक्रम संचालन गर्दा देखापरेका समस्याहरु

- कार्यक्रम स्थलमा कार्य सचालन गर्दा तथा सम्प्रन्न पश्चातका फोटोहरु ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.३४००००००|- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- लग यार्ड निर्माण भइ काठदाउरा सुरक्षित घाटगदि भई गुणस्तरमा ह्रास नहुने ।

**१.३२. वाँसमा आधारित उद्योग**

यस कार्यक्रममा विनियोजित रकम प्रदेश नं. १ अन्तरगत वाँसमा आधारित मझौला तथा ठूला उद्यम स्थापना तथा संचालन गर्नका लागि खर्च गर्न सकिनेछ । सो कार्यक्रम संचालन गर्दा वन पैदावारमा आधारित वन उद्यम स्थापना तथा संचालन कार्यविधि, २०७५ (अनुसूची नं. १) अनुसार गर्नु पर्नेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.१५००००००|- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- वाँसमा आधारित उद्ध्योग स्थापना भई स्थानिय रोजगारी बृद्धि हुने ।
- स्थानिय श्रोतको उपयोग भई आयआर्जनमा बृद्धि हुने ।

**१.३३. वन पैदावारमा आधारित उद्योग सन्चालन**

यस कार्यक्रममा विनियोजित रकम वन पैदावारमा आधारित मझौला तथा ठूला उद्यम स्थापना तथा संचालन गर्नका लागि खर्च गर्न सकिनेछ । सो कार्यक्रम संचालन गर्दा वन पैदावारमा आधारित वन उद्यम स्थापना तथा संचालन कार्यविधि, २०७५ (अनुसूची नं. १) अनुसार गर्नु पर्नेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.१००००००००|- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- वनपैदावारमा आधारित उद्ध्योग स्थापना भई स्थानिय रोजगारी बृद्धि हुने ।
- स्थानिय श्रोतको उपयोग भई आयआर्जनमा बृद्धि हुने ।
- स्थानिय स्तरमा वनजन्य उत्पादनको सहज उपलब्धता हुने ।

१.३४. काठ ट्रिटमेन्ट प्लान्ट स्थापना

यस कार्यक्रममा विनियोजित रकम साल र अस्ना वाहेकका काठको गुणस्तर बृध्दि गर्न काठ ट्रिटमेन्ट प्लान्ट स्थापना तथा संचालनमा खर्च गर्न सकिनेछ । सो कार्यक्रम संचालन गर्दा वन पैदावारमा आधारित वन उद्यम स्थापना तथा संचालन कार्यविधि, २०७५ (अनुसूची नं. १) अनुसार गर्नु पर्नेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.१५००००००।- व्यवस्था गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- काठको गुणस्तरमा बृद्धि भई मुल्य अभिबृद्धि हुने ।
- स्थानिय श्रोतको उपयोग भई आयआर्जनमा बृद्धि हुने ।
- स्थानिय स्तरमा वनजन्य उत्पादनको सहज उपलब्धता हुने ।

**१.३५. पर्यापर्यटन प्रवर्द्धन**

यस कार्यक्रममा विनियोजित रकम सामुदायिक वनहरुमा पर्यापर्यटन प्रवर्धनका लागि खर्च गर्न सकिनेछ । सो कार्यक्रम संचालन गर्दा सामुदायिक वनमा पर्यापर्यटन प्रवर्धन कार्यविधि, २०७५ (अनुसूची नं. २) अनुसार गर्नु पर्नेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.१५००००००।- व्यवस्था गरिएको छ ।

**१.३६. काष्ठ उद्योग स्थापना तथा सञ्चालन**

यस कार्यक्रममा विनियोजित रकम काष्ठमा आधारित मझौला तथा ठूला उद्यम स्थापना तथा संचालन गर्नका लागि खर्च गर्न सकिनेछ । सो कार्यक्रम संचालन गर्दा वन पैदावारमा आधारित वन उद्यम स्थापना तथा संचालन कार्यविधि, २०७५ (अनुसूची नं. १) अनुसार गर्नु पर्नेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.३०००००००।- व्यवस्था गरिएको छ ।

**१.३७. साझेदारी र चक्ला वनमा बैज्ञानिक वन व्यवस्थापन**

यस शीर्षकमा विनियोजित रकम बुँदा नं. १.१४ र १.१२ मा भएको व्यवस्था अनुसार खर्च गर्नु पर्नेछ ।

**बजेट व्यवस्थापन**

यो कार्यक्रमको लागि वजेट रु.७००००००।- व्यवस्था गरिएको छ ।

## २. सामुदायिक तथा कवुलियती वन विकास कार्यक्रम (व.उ.शि.नं. ३२९८०८)

बिगत तीन दशक अर्थात् वन क्षेत्रको गुरुयोजना लागु भए देखि नै नेपाल सरकारको पहिलो प्राथमिकताको (P1) कार्यक्रमको रुपमा ७४ वटै (मुस्ताङग वाहेक) जिल्लाहरुमा सामुदायिक वन विकास कार्यक्रम संचालन हुँदै आईरहेको छ । शुरुमा वनको संरक्षण गरी स्थानिय जनताको वन पैदावारको दैनिक आधारभूत आवश्यकता पूरा गर्ने ध्येयका साथ संचालित यो कार्यक्रम क्रमशः गरिवी न्यूनिकरण, जीविकोपार्जनमा सुधार, सुशासन, जलवायु परिवर्तन, समावेशीताका सवालहरुलाई सम्वोधन गर्दै आईरहेको छ । हाल करिव २२,२६६ हजार समूह मार्फत २२ लाख ३७ हजार ६७० हेक्टर क्षेत्रफल व्यवस्थापन भई २९ लाख ७ हजार ८७१ स्थानिय घरधुरी लाभान्वित भई स्थानिय रोजगारीमा योगदान पुर्याईरहेको छ ।

कवुलियती वनको संरक्षण तथा व्यवस्थापनबाट वनको हैसियतमा सुधार तथा स्थानिय जनताको आयआर्जनमा वृद्दि गर्ने लक्ष्यका साथ यो कार्यक्रम आ.व. २०४९/५० देखि नै संचालित छ । विगतमा विभिन्न दातृ संस्थाहरुको सहयोगमा संचालन भएको यस कार्यक्रम अहिले नेपाल सरकारको आन्तरिक श्रोतबाट संचालित छ । यस कार्यक्रमबाट ७,४८४ समूहहरुबाट ४३,३१६.५२ हे. वन व्यवस्थापन ७१,७५३ घरधुरीहरु लाभान्वित भई रहेका छन् ।

यस कार्यक्रम अन्तर्गत सामुदायिक तथा कवुलियती वन समूह गठन, हस्तान्तरण तथा पुनरावलोकन, स्थलगत अभ्यास, क्षमता तथा सिप विकास तालिम, गोष्ठी तथा अन्तक्रिया, तथ्यांक संकलन तथा अध्यावधिक, सामुदायिक वनमा वैज्ञानिक व्यवस्थापन, क.व. समूहमा अन फार्मबाट आय आर्जनको लागि अनुदान सहयोग, पशु स्वास्थय सेवा तथ वंश सुधार सहयोग, कवुलियती वन सहकारी गठन, संचालन र अनुदान, क.वनमा वृक्षारोपण, समूहबाट उत्पादित विरुवा खरिद, वितरण तथा रोपण, वाँस निगालो राईजोम लगायत डालेघाँस/घाँस, जडीवुटी तथा वहुउद्धेशीय विरुवा खरिद तथा वितरण आदि मुख्य कार्यक्रमको रुपमा संचालन हुनेछन् । यो कार्यक्रम संचालनका लागि नेपाल सरकारले सशर्त रु.२३,९१,८१०००|- विनियोजन गरेको छ ।

### २.१. एक क्लष्टर एक उत्पादनः अमृसो, भूईकटहर, अलैची, बांस तथा अन्य गैरकाष्ठ वनपैदावार

एक आपसमा जोडिएका, पायक पर्ने (सामान्यतया दश समूहसम्म) समूहहरुको एक क्लष्टर मानी एकै किसिमका पैदावार उत्पादन हुने गरी कार्य संचालन गर्नु पर्दछ । यस्ता कार्य संचालन गर्न आवश्यक आयमूलक विरुवा उत्पादन/खरिद गरी रोपण, संरक्षण गर्नुपर्नेछ गरी अनुदान प्रदान गर्न यो कार्यक्रम सञ्चालन गरिने छ । अनुदान दिदा कार्य सम्पन्न गर्न पहिलो किस्ता को रुपमा विनियोजित वजेटको ७५ प्रतिशत र कार्यक्रम सम्पन्न भई सम्पुर्ण कागजात सहितको प्रगति प्रतिवेदन पेश गरे पश्च्यात वाँकि रहेको २५ प्रतिशत रकम प्रदान गरिनेछ । प्रगति प्रतिवेदन तयार गर्दा निम्न कुराहरुमा ध्यान दिनुपर्नेछ ।

- एक क्लष्टर एक उत्पादनको योजना, औचित्य

- सम्झौता गरेको कबुलियती वन समूहको नाम, ठेगाना तथा छिमेकी समूहहरुको अवस्था
- सम्झौता भएको विरुवा संख्या, उत्पादित विरुवा संख्या र जात

वृक्षारोपण गरिएको क्षेत्रफल कबुलियती वन समूहको उत्पादनलाई व्यवसायिक बनाउन यस कार्यक्रमको प्रस्ताव गरिएको हो । यस कार्यक्रममा विनियोजित बजेटबाट क्लष्टरमा वढी भन्दा वढी क्षेत्र ढाक्ने गरी र उपभोक्ताहरुको आय आर्जनमा टेवा पुग्ने कार्यक्रममा खर्च गरिनु पर्नेछ ।

**जनशक्ति व्यवस्थापन**

प्रदेशस्तरका डिभिजन तथा सबडिभिजन कार्यालयका कर्मचारीहरुको प्राबिधिक सहयोग लिएर कवुलियति वन उपभोक्ता समूह मार्फत यो कार्य गर्नु पर्नेछ ।

**वजेट व्यवस्थापन**

यो कार्य सम्पन्न गर्न नेपाल सरकार द्वारा कुल रकम रु १,७६,१२,००० ( १ करोड छहत्तर हजार लाख बाह्र हजार बिनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- कवुलियति वन क्लस्टरमा कुनै एक प्रजातिको खेति विस्तार हुनेछ
- कवुलियति वन समुहमा आम्दानीको स्रोत बढ्नेछ,

## २.२. कबुलियती वन समूहको विधान तथा कार्ययोजना पुनरावलोकन (जीविकोपार्जन सुधार योजना समेत)

स्वीकृत अवधि पुगिसकेका र कवुलियती वन समूहले पुनरावलोकनको लागि माग गरेका विधान, कार्ययोजना तथा जीविकोपार्जन सुधार योजना पुनरावलोकन गर्न यस शीर्षकको रकम खर्च गर्न सकिने । कार्ययोजना नवीकरण प्रकृया तालिमको अभ्यासकै रुपमा गरिनेछ । एकदिने स्थलगत रुपमा हुने यस अभ्यासमा छनौट भएका घरधुरीका महिला पुरुष दुई जनाका दरले समावेश गराउनु पर्दछ । अन्य प्रक्रिया नयाँ कार्ययोजना तयार गर्दा अपनाईने कार्यविधि अनुसार नै गर्नुपर्नेछ ।

**जनशक्ति व्यवस्थापन**

प्रदेशस्तरका डिभिजन तथा सबडिभिजन कार्यालयका कर्मचारीहरु/कवुलियती वन तर्फको वन प्राबिधिक सहायक हरुले जिल्ला सुपरभाईजर तथा समूह सहयोगीको सहयोग लिएर यो कार्य गर्नु पर्नेछ । साथै कार्ययोजना नबिकरण गर्दा कवुलियति वन समूह हरुसंगको समन्वय तथा सहकार्य वाट गर्नु पर्नेछ ।

**वजेट व्यवस्थापन**

यो कार्य सम्पन्न गर्न नेपाल सरकार द्वारा कुल रकम रु.४९,३३,००० (उनन्पचास लाख तेतिस हजार) बिनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- ७०४ वटा कवुलियती वन को कबुलियती वन समूहको विधान तथा कार्ययोजना पुनरावलोकन भएको हुनेछ ।

**२.३. सामुदायिक वन उपभोक्ता समूहको कार्ययोजना नवीकरणमा सहयोग (गरीव, महिला र दलित लक्षित जलवायु परिवर्तन अनुकूलन योजना)**

वन ऐन २०४९, वन नियमावली २०५१ तथा सामुदायिक वन विकास कार्यक्रमको मागदर्शन, २०७१ (तेश्रो सशोधन) ले निर्धारण गरेको आवश्यक प्रक्रियाहरु पूरा गरेर सम्पन्न गर्नुपर्नेछ । क. सामुदायिक वन उपभोक्ता समूह गठन तथा दर्ता प्रक्रियामा सहजीकरण उपलब्ध बजेटबाट टोल,समुदाय छलफल गोष्ठी, खाजा खर्च, भ्रमण खर्च, ईन्धन, संचार र बिधान तयारीको लागि टाइपिङ्ग, प्रिन्टिङ्ग र बाईन्डिङ्गमा खर्च गर्नुपर्नेछ ।

सामुदायिक वन कार्ययोजना तयारी तथा वन हस्तान्तरण प्रक्रियामा सहजीकरणको काम कम्तीमा वन कार्यसहायक तहका वन प्राबिधिकबाट हुनुपर्नेछ । यसका लागि सामुदायिक वन स्रोत सर्भेक्षण मार्गदर्शन, २०७१ अनुसार वन स्रोत सर्भेक्षण,नापीको नक्शा तथा GPS बाट सीमा सर्भेक्षण तथा permanent sample plot layout गरी सामुदायिक वनको बिस्तृत नक्शा समेत तयार गरी पेश गर्नुपर्नेछ ।

**जनशक्ति व्यवस्थापन**

प्रदेशस्तरका डिभिजन तथा सबडिभिजन कार्यालयका कर्मचारीहरद्वारा यो कार्य गर्नु पर्नेछ । साथै कार्ययोजना नबिकरण गर्दा सामुदायिक वन समूह हरुसंगको समन्वय तथा सहकार्य गर्नु पर्नेछ ।

**वजेट व्यवस्थापन**

यो कार्य सम्पन्न गर्न नेपाल सरकार द्वारा कुल रकम रु ९२,१०,००० (बयानब्बे लाख दस हजार) बिनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- ९२१ वटा सामुदायिक वन उपभोक्ता समूहको कार्ययोजना नवीकरणमा सहयोग भएको हुनेछ ।

**२.४. सामुदायिक वनमा वैज्ञानिक वन व्यवस्थापन तथा कार्ययोजना कार्यान्वयन**

**क. सामुदायिक वन क्षेत्र छनौट**

उपलब्ध भए सम्म १०० हेक्टर वा सो भन्दा बढी क्षेत्रफलका सामुदायिक वनहरु वैज्ञानिक ब्यवस्थापनको लागि छनौट गर्न सकिन्छ । कुनै स्थानमा एक भन्दा वढी सामुदायिक वनहरुको क्षेत्रफललाई एउटै व्लकमा पनि वन ब्यवस्थापन कार्य योजना तयार गर्न सकिन्छ । यसको लागि समावेश हुने सामुदायिक वन उपभोक्ता समूहहरुको साधारण सभाबाट सहमति लिएर वन कार्य योजना परिमार्जन गरेर गर्नु पर्नेछ ।

**ख. सामुदायिक वनमा बैज्ञानिक वन ब्यवस्थापन कार्ययोजना तयारी (परिमार्जन), स्विकृति तथा कार्यान्वयन**

१) वैज्ञानिक वन ब्यवस्थापनको लागि छनौटमा परेका सामुदायिक वनका पदाधिकारी तथा उपभोक्ताहरुलाई तालिम दिन सकिने छ । यस्तो तालिम अधिकांश फिल्डमा गएर वन क्षेत्रमा नै संचालन गर्नु पर्नेछ ।

२. वैज्ञानिक वन व्यवस्थापन कार्ययोजना तयारी कार्यमा प्राविधिक सहायता डिभिजन वन कार्यालय ले उपलब्ध गराउनु पर्नेछ । तर डिभिजन वन कार्यालय को जनशक्तिले नभ्याउने अवस्थामा परामर्स सेवाबाट कार्ययोजनाहरु तयारी तथा परिमार्जन गर्न सकिनेछ । सेवा प्रदायकबाट कार्ययोजनाहरु तयार गर्दा वा परिमार्जन गर्दा निम्न प्रकृया पुरा गरी गर्नु पर्नेछ ।

क) संभाब्य सेवा प्रदायकहरुको सूचि डिभिजन वन कार्यालयले तयार गर्नेछ ।

ख) समूहले कार्ययोजना तयार गर्नको लागि डिभिजन वन कार्यालयमा सूचिकृत भएका सेवा प्रदायकबाट प्रस्ताव आव्हान गरी कम्तिमा डिभिजन वन कार्यालय, संवन्धित सबडिभिजन वन कार्यालय र समूहमा १५ दिने सूचना टाँस गर्नु पर्नेछ । प्रस्तावसँग वन कार्ययोजना तयार गर्ने कार्यमा संलग्न हुने वन प्राविधिकको बायोडाटा अनिवार्य रुपमा समावेश भएको हुन पर्ने छ र प्रस्तावमा बायोडाटा समावेश भएको प्राविधिकले नै काम गर्नु पर्ने छ । कार्ययोजना तयार गर्ने वा परिमार्जन गर्ने वन प्राविधक (टोली नेता) कम्तीमा वन विज्ञानमा स्नातक गरी संवन्धित बिषयमा ३ बर्षको अनुभव भएको हुनु पर्नेछ ।

ग) परेका प्रस्तावहरुको समूहले डिभिजन/सबडिभिजन वन कार्यालयका वन प्राविधिकको सहयोगमा प्राविधिक र आंर्थिक पक्षको आधारमा मुल्याँकन गर्नु पर्नेछ । प्राविधिक पक्षको भार ८० प्रतिशत र आर्थिक पक्षको भार २० प्रतिशत राखी मुल्याँकन गर्दा सबै भन्दा बढी अंक प्राप्त गर्दछ सोही सेवा प्रदायकलाई छनौट गरी काम शुरु गर्न सहमतिको लागि डिभिजन वन कार्यालयमा पठाउनु पर्नेछ ।

घ) डिभिजन वन कार्यालयले कार्ययोजना तयारी वा परिमार्जन गर्ने कार्यको लागत अनुमान तयार गरी सो कार्य वापतको रकम सम्वन्धित समुहको वैंक खातामा जम्मा गर्न सक्नेछ । स्वीकृत लागत अनुसारका कार्यक्रम संचालन गर्न डिभिजन वन कार्यालयले उपलव्ध गराएको रकम अपुग भएमा वा समूह आफैले गर्न चाहेमा आफनो कोषको रकम समेत खर्च गरी कार्ययोजना तयारी तथा कार्यान्वयन गर्न सक्नेछ । समुहले माथि उल्लेखित प्रक्रिया पुरा गरी छनौट भएको सेवा प्रदायक संग लागत र समय तोकी सम्झौता गरी कार्ययोजना तयारी तथा कार्यान्वयनको काम संचालन गर्नु पर्नेछ । सँझौता बमोजिम समयमै काम सम्पन्न नगर्ने सेवा प्रदायकलाई सँवन्धित समूहको सिफारिसमा डिभिजन वन कार्यालयले कालोसूचिमा राख्ने लागायत कार्वाही गर्न सक्नेछ । सव डिभिजन वन कार्यालयले सो को अनुगमन तथा पृष्ठपोषण गर्नेछ ।

ङ) कार्ययोजना कार्यान्वयनको लागि स्विकृत कार्ययोजना बमोजिमका वन व्यवस्थापनका कृयाकलापहरु गर्न शुरुमा एक पटकको लागि मात्र समूहलाई अनुदान दिन सकिनेछ ।

च) कार्ययोजना स्विकृति

उपरोक्त अनुसार तयार भएको वा परिमार्जन भएको कार्ययोजना स्विकृति पूर्व रिभ्युको लागि डिभिजनल वन अधिकृतले ३ सदस्यीय टिम गठन गर्नु पर्नेछ, उक्त टिमले रिभ्यु समीक्षा, पुनरावलोकन गरी आवश्यक परे बिशेषज्ञको समेत सेवा लिई कार्ययोजनामा आवश्यक सुधार गरी स्विकृतिको लागि सिफारिस गर्नु पर्नेछ । वैठक, खाजा, मसलन्द तथा विशेषज्ञको पारिश्रमिक आदि यस शिर्षकमा विनियोजित बजेटबाट खर्च गर्न सकिनेछ । विनियोजित बजेटको बढीमा ५ प्रतिशत रकम कार्यक्रम सचालनका लागि डिभिजन वन कार्यालयले व्यवस्थापकीय कार्यमा खर्च गर्न सक्नेछ ।

**जनशक्ति व्यवस्थापन**

प्रदेशस्तरका डिभिजन तथा सबडिभिजन कार्यालयका कर्मचारीहरुद्वारा यो कार्य गर्नु पर्नेछ ।

**वजेट व्यवस्थापन**

यो कार्य सम्पन्न गर्न नेपाल सरकार द्वारा कुल रकम रु ३,१०,८३,००० (तिन करोड दस लाख तिरासी हजार) बिनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- सामुदायिक वन ब्यवस्थापन कार्ययोजना तयारी (परिमार्जन), स्विकृति तथा कार्यान्वयन

## २.५. सामुदायिक वनमा पर्यापर्यटन अभिवृद्धि

सामुदायिक वनले दिन सक्ने वातावरणीय सेवाको अधिकतम उपयोग गर्न वन पैदावारको लागि सामुदायिक वन व्यवस्थापनका साथै पर्यापर्यटन कार्यक्रम समेत्त संचालन गर्न आवश्यक देखिएको । हाल कतिपय सामुदायिक वनहरुले स्वतस्फुर्त रुपमा पर्यापर्यटन व्यवस्थापन गरिराखेका छन् । यस वर्ष पाँच हजार सामुदायिक वनहरुमा सामुदायिक वनमा पर्यापर्यटन प्रवर्धन कार्यविधि २०७५ (अनुसूची २) बमोजिम कार्य संचालन गरिनेछ ।

**जनशक्ति व्यवस्थापन**

प्रदेशस्तरका डिभिजन तथा सबडिभिजन कार्यालयका कर्मचारीहरको प्राबिधीक सहयोग लिएर सामुदायिक वन को उपभोक्ताहरु द्वारा गर्नु पर्ने छ.

**वजेट व्यवस्थापन**

यो कार्य सम्पन्न गर्न नेपाल सरकार द्वारा कुल रकम रु ७,००,००,००० (सात करोड) बिनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- ७०० वटा सामुदायिक वनहरुमा सामुदायिक वनमा पर्यापर्यटन अभिवृद्धि भएको हुनेछ।

२.६. सामाजिक परिचालन सेवा (समूह परिचालनको अनुदान सहयोग)

लक्षित समूहहरु मध्येवाट उनीहरुले नै संस्थागत रुपमा छानेका महिला समूह परिचालिकाहरु नै सामाजिक परिचालनका संवाहक हुनेछन् । यस्ता परिचालक संलग्न समूह वा पायक पर्ने समूहसँग डिभिजन वन कार्यालय ले नियमानुसार अग्रिम सम्झौता गरी विनियोजित रकमको अधिनमा रही मासिक रुपमा सामाजिक परिचालकको पारिश्रमिक अनुदान स्वरुप उपलब्ध गराउनु पर्नेछ । कार्यालयको मासिक वैठकमा भाग लिन जाँदा र आउँदा यातायात खर्च उपलब्ध गराउन सकिनेछ । कार्यक्रम कार्यान्वयन कार्यबिधि, २०७५ डिभिजन वन कार्यालय र सम्बन्धित इलाका वन कार्यालयको नियन्त्रण र सुपरिवेक्षणमा रहि सामाजिक परिचालकले निम्न कार्यहरु गर्नुपर्नेछ छ;

(क) कवुलियती वन समूह, डिभिजन वन कार्यालय र पशुसेवा कार्यालय लगायतका निकायको वीचमा सम्वन्ध र समन्वय कायम गर्ने,

(ख) समूह गठनका लागि परिचालन, उत्प्रेरणा र सहयोग गर्ने

(ग) वैठक व्यवस्थापन गर्न कवुलियती वन समूहलाई निरन्तर सहयोग गर्ने, नेतृत्व विकास, रेकर्ड राख्ने, वचत कार्यमा सहयोग गर्ने र साधारण शिशु स्वास्थ्य, पोषण र सरसफाईवारे समूह सदस्यलाई ज्ञान दिने,

(घ) इलाका तथा डिभिजन वन कार्यालय संग समन्वय गरी समूहको लागि संचालन हुने फिल्डस्तरका कार्यहरु र तालीम तथा प्रचार प्रसार कार्यमा सहयोग गर्ने,

(ङ) आफ्नो कार्यक्षेत्रका सवै कवुलियती वन समूहको वैठकमा भाग लिने,

(च) कवुलियती वन समूहको अनुगमन कार्यमा इलाका वन कार्यालयलाई सहयोग गर्ने,

(छ) विशेष गरी महिला र दलितहरुलाई सरकारी कागजात, प्रमाणपत्रहरु प्राप्त गर्न आवश्यक सहयोग गर्ने,

(ज) साधारण लेखपढ गर्न नजान्ने सदस्यलाई प्रौढ शिक्षामा सहभागी गराउने र नेतृत्व विकासका लागि समूहको जनशक्ति विकास गराउने,

(झ) डिभिजन वन कार्यालय को नियमित मासिक वैठकमा सम्भव भएसम्म सहभागी हुने,

(ञ) समूहले पाउने सहयोगको बारेमा डिभिजन वन कार्यालय बाट जानकारी लिई सोही बमोजिम समूहलाई जानकारी गराउने,

(ट) अन्यको हकमा मार्गदर्शनमा उल्लेख भए बमोजिम हुनेछ ।

**जनशक्ति व्यवस्थापन**

प्रदेशस्तरका डिभिजन कार्यालय वाट सम्भव भए सम्म कवुलियति वन समूहका उपभोक्ता हरु वाट समुह सहयोगी करार मा भर्ना गरि सामाजिक परिचालन सेवा प्रदान गर्नु पर्नेछ

**वजेट व्यवस्थापन**

यो कार्य सम्पन्न गर्न नेपाल सरकार द्वारा कुल रकम रु २,१७,९०,००० (दुई करोड सत्र लाख नब्बे हजार मात्र) बिनियोजन गरिएको छ ।

अपेक्षित उपलब्धि

- १८१ जना समूह सहयोगी करारमा भर्ना गरिनेछ ।

२.७. सामाजिक परिचालन सुपरिवेक्षण (जिल्ला सुपरभाईजरबाट्)

सेक्टर तथा इलाका वन कार्यालयको समन्वयमा सामाजिक परिचालकको कार्यको अनुगमन तथा सुपरिवेक्षण गरी डिभिजन वन कार्यालय मा नियमित प्रतिवेदन पेश गर्न विनियोजित रकमको अधिनमा रही मासिक रुपमा पारिश्रमिक उपलब्ध गराउने गरी करार सेवामा जिल्ला सुपरभाईजरको व्यवस्था गर्नुपर्नेछ । जिल्ला सुपरभाइजरको कार्य विवरण निम्न बमोजिम हुनेछ,

(क) कवुलियती वन समूह, डिभिजन वन कार्यालय तथा पशु सेवा कार्यालय लगायत जिल्लास्थित अन्य निकायको वीचमा सम्वन्ध कायम गर्ने,

(ख) समूह सहयोगीको कार्यको अनुगमन तथा निरीक्षण गर्ने,

(ग) समूह सहयोगीलाई परिचालन, उत्प्रेरणा र सहयोग गर्ने,

(घ) डिभिजन वन कार्यालय र जिल्लास्थित अन्य कार्यालयवाट समूहको लागि संचालन हुने फिल्डस्तरका कार्यहरु र तालिम तथा प्रचारप्रसार कार्यमा सहयोग गर्ने,

(ङ) समूह सहयोगी मार्फत कवुलियती वन समूहको अनुगमन गर्नमा डिभिजन वन कार्यालय लाई सहयोग गर्ने,

(च) समूहमा आबद्ध विशेष गरी महिला र दलितहरुलाई आवश्यक सरकारी कागजात, प्रमाणपत्रहरु प्राप्त गर्न सहयोग गर्ने,

(छ) सामाजिक परिचालनको काममा मार्गदर्शक वनी आवश्यक सहयोग, समन्वय र सहजीकरण गर्ने ।

जनशक्ति व्यवस्थापन

प्रदेशस्तरका डिभिजन कार्यालय वाट सम्भव भए सम्म कवुलियति वन समूहका उपभोक्ताहरु वाट जिल्ला सुपरभाईजर करार मा भर्ना गरि सामाजिक परिचालन सुपरिवेक्षण गर्नु पर्नेछ

वजेट व्यवस्थापन

यो कार्य सम्पन्न गर्न नेपाल सरकार द्वारा कुल रकम रु ७३,४६,००० (रु त्रिहत्तर लाख छयालीस हजार मात्र) बिनियोजन गरिएको छ ।

अपेक्षित उपलब्धि

- ३६ जना जिल्ला सुपरभाईजर करारमा भर्ना गरिनेछ ।

२.८. प्राविधिक सहयोग सेवा (वन प्राविधिक सहायकबाट)

जिल्लामा नयाँ कवुलियती वन समूह गठन, कार्ययोजना र जीविकोपार्जन योजना तयारी, स्थापित समूहलाई प्राविधिक सहयोग लगायत डिभिजन वन कार्यालय को कार्यक्रम संचालनमा थप सहयोग पुर्याउन वन विज्ञानमा प्रविणता प्रमाणपत्र तह वा सो सरहको योग्यता पुगेको प्राविधिकबाट सेवा करारमा लिन यस शीर्षकमा विनियोजित रकम खर्च गरिनेछ । नेपाल सरकारको आर्थिक ऐन/नियम

वमोजिम राख्नुपर्ने मासिक कार्य सम्पन्न प्रतिवेदन, डोर हाजिरी लगायतका आवश्यक कागजात समावेश गर्नुपर्नेछ । निजले जिल्ला वन अधिकृत वा निजले तोकेको कर्मचारीको अधिनमा रही काम गर्नु पर्नेछ । साथै मासिक प्रगतिको आधारमा मात्र मासिक पारिश्रमिकको निकासा गरिनेछ ।

**जनशक्ति व्यवस्थापन**

प्रदेशस्तरका डिभिजन कार्यालयले वन प्राबिधिक सहायक (रेन्जर) करार मा भर्ना गरि प्राबिधिक सेवा प्रदान गर्नु पर्नेछ ।

**वजेट व्यवस्थापन**

यो कार्य सम्पन्न गर्न नेपाल सरकार द्वारा कुल रकम रु ७०,३३,००० (रु सत्तरी लाख तेतिस हजार मात्र) बिनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- २९ जना वन प्राबिधिक सहायक (रेन्जर) करारमा भर्ना गरिनेछ ।

## २.९. समूहको वचत व्यवस्थापन तथा परिचालन सेवा (ग्रामीण वित्त सहायकबाट)

कवुलियती वन समूहलाई ग्रामीण वित सेवा मार्फत थप सहयोग पुर्याउन स्थानीय सहकारी डिभिजन कार्यालयसँग समन्वय गरीलघु वित्त सहायकको व्यवस्था नियमानुसार गर्नुपर्नेछ । पारिश्रमिक भुक्तानी गर्न नेपाल सरकारको आर्थिक ऐन÷नियम वमोजिम राख्नुपर्ने मासिक कार्य सम्पन्न प्रतिवेदन, डोर हाजिरी लगायतका आवश्यक कागजात समावेश गर्नुपर्नेछ । ग्रामीण वित्त सहायकको योग्यता कम्तीमा वाणिज्य विषयमा प्रविणता प्रमाणपत्र तह वा सो सरहको भई कार्य विवरण निम्न बमोजिम हुनेछ ।

- कवुलियती वन समूहलाई ग्रामीण वित्त कार्यक्रममा सहयोग तथा सहजीकरण गर्नुपर्नेछ,
- समूहबाट संचालन भैरहेका आर्थिक कृयाकलापको अनुगमन तथा निरीक्षण गर्नुका र साथै आवश्यक सहयोग गर्ने,
- स्थानीय कृषि सहकारी संस्थालाई सुदृढ गराई उक्त संस्थामा कवुलियती वन समूहको पहुँच पुर्याउन सहयोग गर्ने,
- सहकारी नभएको क्लष्टरमा सामुदायिक वन उपभोक्ता समूहसँग समेत सहकार्य गरी नयाँ सहकारी गठन गर्न आवश्यक सहयोग र सहजीकरण गर्ने,
- डिभिजन वन कार्यालय को नियमित मासिक वैठकमा अनिवार्य सहभागी हुने,
- विद्यमान वचत तथा ऋण पद्धतिको अनुगमन गरी स्थानीय सहकारीसँग आवद्ध गराउने,
- कवुलियती वन समूह, सामुदायिक वन समूह र संलग्न सहकारीलाई कोचिंग तथा समयानुकूल संस्थागत सहयोग गर्ने ।

**जनशक्ति व्यवस्थापन**

प्रदेशस्तरका डिभिजन कार्यालयहरुलले समूहको वचत व्यवस्थापन तथा परिचालन सेवा प्रदान गर्न ग्रामिण वित्त सहायक करार मा भर्ना गरि प्राबिधिक सेवा प्रदान गर्नु पर्नेछ ।

वजेट व्यवस्थापन

यो कार्य सम्पन्न गर्न नेपाल सरकार द्वारा कुल रकम रु ५९,४०,००० (रु उन्पचास लाख चालीस हजार मात्र) बिनियोजन गरिएको छ ।

अपेक्षित उपलब्धि :

- २९ जना ग्रामिण वित्त सहायक करारमा भर्ना गरिनेछ ।

## २.१०. कवुलियती वन उत्कृष्ट समूह पुरस्कार

तोकिएको मापदण्डको आधारमा जिल्लामा स्थापित कवुलियती वन समूह र वनको मूल्याङ्कन गरी उत्कृष्ट काम गर्नुपर्नेछ पहिलो, दोश्रो र तेश्रो समूहलाई विनियोजित बजेटवाट पुरस्कार तथा प्रमाण–पत्र प्रदान गरिनेछ । प्रथम ७०००।–, द्धितीय ५०००।– र तृतिय ३०००।– दरले पुरस्कार प्रदान गर्नुपर्नेछ । डिभिजनको कार्यक्रम कार्यदलवाट यो कार्यमा सहयोग लिन सकिने छ । समूह छनौटका आधारहरु देहाय बमोजिमको हुनेछन् । पुरस्कृत हुने समूहको विवरण वार्षिक प्रगति पुस्तिकामा समावेश गर्नु पर्नेछ ।

- वचत तथा ऋण परिचालनको अवस्था,
- जग्गा विकासको गुणस्तर,
- नियमित बैठक तथा रेकर्ड किपिङ्ग,
- अन्य निकायसँगको सहकार्य,
- आय आर्जनका क्रियाकलाप संचालन ।

**जनशक्ति व्यवस्थापन**

प्रदेशस्तरका डिभिजन तथा सबडिभिजन कार्यालयका कर्मचारीहरु/कवुलियती वन तर्फको वन प्राबिधिक सहायक हरुले जिल्ला सुपरभाईजर तथा समूह सहयोगीको सहयोग लिएर यो कार्य गर्नु पर्नेछ । यसरी कवुलियती वन उत्कृष्ट समूह पुरस्कृत गर्दा डिभिजन स्तरमा रहेको सामुदायिक वन महासंघ संग को समन्वयमा गर्नु पर्नेछ ।

**वजेट व्यवस्थापन**

यो कार्य सम्पन्न गर्न नेपाल सरकार द्वारा कुल रकम रु १५,३०,००० (रु पन्ध्र लाख तिस हजार मात्र) बिनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- प्रत्यक डिभिजनका उत्कृष्ट सामुदायिक वन समूहहरुलाई पुरस्कृत गरिनेछ ।

## २.११. उत्कृष्ट सामुदायिक वन उपभोक्ता समूह पुरस्कार

सामुदायिक वन विकास कार्यक्रमको मार्गदर्शन, २०७१ को अनुसूचीमा उल्लेखित सामुदायिक वन अनुगमनका सूचकहरु मध्ये गणेशमान सिंह सामुदायिक वन राष्ट्रिय पुरस्कारको लागि निर्धारण गरिएका मापदण्ड र सूचकका आधारमा जिल्लाका सम्पूर्ण कार्यक्रम कार्यान्वयन कार्यबिधि, २०७३

सामुदायिक वन उपभोक्ता समूहलाई प्रथम, दोश्रो तथा तेश्रो पुरस्कार र प्रमाणपत्र प्रदान गरिने छ । यसले अन्य सामुदायिक वनलाई समेत उत्कृष्ट कार्य संचालन गर्न हौसला र प्रेरणा प्रदान गर्नुपर्नेछ । कार्यक्रम सम्पन्न पछि प्रगतिमा निम्न बुँदाहरु समाबेश गर्नु पर्ने छ,

- पुरस्कार प्रदान गरिएको सामुदायिक वन उपभोक्ता समूहहरुको नाम र ठेगाना,
- पुरस्कृत हुनाको कारण (समूहको विशेषता),
- गणेशमान सिंह राष्ट्रिय पुरस्कारको लागि सिफारिस गरिएको पत्र ।

जिल्लामा पुरस्कृत सामुदायिक वन उपभोक्ता समूह र सामुदायिक वनको विस्तृत विवरण सहित राष्ट्रियस्तरमा गणेशमान सिंह राष्ट्रिय पुरस्कारको लागि सिफारिस गरी अनिवार्य रुपमा वन तथा भू-संरक्षण विभागमा पठाउनुपर्नेछ ।

**जनशक्ति व्यवस्थापन**

प्रदेशस्तरमा डिभिजन तथा सबडिभिजन कार्यालयका कर्मचारीहरुले सामुदायिक वन उपभोक्ता महासंघ संग समन्वय गरि उत्कृष्ट समूह पुरस्कृत गर्नु पर्नेछ

**वजेट व्यवस्थापन**

यो कार्य सम्पन्न गर्न नेपाल सरकार द्वारा कुल रकम रु १७,१८,००० (रु सत्र लाख अठार हजार मात्र) बिनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- ३९ जना सामुदायिक वन समूहहरुलाई उत्कृष्ट समूह भनि पुरस्कृत गरिनेछ ।

## २.१२. सामुदायिक वनमा उद्यमशिलता अभिबृद्धि

यस शीर्षकमा विनियोजित रकम डिभिजन वन कार्यालय अन्तर्गतका वन उद्यममा लगानी गर्न ईच्छुक सामुदायिक वन उपभोक्ता समूहरुलाई प्रति समूह अधिकतम रु.१५००००। म्यांचिङ्ग कोषको रुपमा समूहहरुलाई उपलब्ध गराउन सकिने । यस कार्यक्रम अन्तर्गत अनुदान प्राप्त गर्न उपभोक्ता समूहहरुले डिभिजन वन कार्यालयबाट उपलब्ध हुने अनुदान रकम भन्दा न्यून नहुने गरी उद्यमको लागि समूहको कोषबाट पनि रकम विनियोजन गर्नु पर्नेछ ।

**जनशक्ति व्यवस्थापन**

स्थानीय तहका कर्मचारीहरुले डिभिजन तथा सबडिभिजन कार्यलय र सामुदायिक वन हरु संग समन्वय गरि यो कार्य गर्नु पर्नेछ । साथै आवस्कता अनुसार स्थानीय तहका उधोग ब्यबसायी संघ जस्ता निजि क्षेत्र संग समन्वय गर्न सक्नेछ ।

**वजेट व्यवस्थापन**

यो कार्य सम्पन्न गर्न नेपाल सरकार द्वारा कुल रकम रु १,६०,२२,००० (रु एक करोड साठी लाख बाईस हजार मात्र) विनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- ७५३ वटा जना सामुदायिक वनमा आधारित उधम लाई प्रबर्धन गरि सामुदायिक वनमा उद्यमशिलता अभिबृद्धि गरिनेछ ।

### ३. वृक्ष सुधार, वृक्षारोपण तथा निजी वन कार्यक्रम (३२९१०९)

बृक्षसुधार, वृक्षारोपण तथा निजी वन कार्यक्रम अन्तर्गत आधारभूत बृक्षसुधार कार्यक्रम जस्तै वन वीउ संकलन तथा बितरण, वन बीउ उत्पादन प्रयोगशाला संचालन, नर्सरी तथा बिरुवा उत्पादन, वृक्षारोपण जस्ता कार्यक्रमहरु संचालनमा रहेका छन् । साथै, नेपाल सरकारले २०७१।७२ देखि २०८० सम्मको अवधिलाई वन दशकको रुपमा मनाउने निर्णय गरेको सन्दर्भमा उक्त कार्यक्रम यसै विभागबाट संचालित अर्को महत्वपूर्ण कार्यक्रम हो । यस कार्यक्रम एक घर एक रुख, एक गाउँ एक वन, एक नगर अनेक उद्यानलाई प्रवर्धन गर्नुपर्ने लक्ष्यका साथ विविध कार्यक्रमहरु सहित संचालन गरिएको छ । यस आर्थिक वर्ष २०७५/७६ देखि हैसियत खस्केको सरकारी वनक्षेत्रहरुमा, निजी तथा सार्वजनिक पर्ति जग्गामा कृषिवन विकास कार्यक्रम लागु गगिएको छ । यो कार्यक्रम देशका ८४ वटा डिभिजन वन कार्यालयहरु मार्फत संचालन गरिनेछ । यस आ.व. मा यो कार्यक्रमका लागि रु.२५,९३,२०,०००।- विनियोजन गरिएको छ ।

### ३.१. विरुवा उत्पादन (विभिन्न प्रकारका रुख, काष्ठ तथा बहुउपयोगी प्रजाति)

जिल्लामा खाली रहेको वनक्षेत्रमा वृक्षारोपण गर्न, समुदायको जग्गामा बिरुवा रोपण गरी रुखले ढाकेको क्षेत्रको बिस्तार गर्न डिभिजन वन कार्यालय वा मातहतका सब डिभिजन वन कार्यालय मार्फत विरुवा उत्पादन कार्ययोजना वनाई यो कार्यक्रम सञ्चालन गर्नु पर्नेछ । विज्ञहरु समेत सम्मिलित टोलीको राय लिएर डिभिजनल वन अधिकृतले कर्मचारीहरुको बैठकबाट स्थानीय आवश्यकता, उपभोक्ताहरुको रुचि, प्राविधिक उपयुक्तताका आधारमा विभिन्न प्रकारका रुख, काष्ठ तथा अन्य बहुउपयोगी प्रजाति छनौट गर्न सक्नेछ । कार्यालय आफैले नर्सरी संचालन गर्दा वीउ स्रोत, समयतालिका आदि समेत खुल्ने गरी डिभिजनल वन अधिकृतबाट प्रमाणित गरिएको वन नर्सरी रेजिष्टर राख्नु पर्नेछ । उक्त वन नर्सरीमा विरुवा वितरणको विवरण अनिवार्यरुपमा राख्नु पर्दछ ।

यसमा विभिन्न साइजका पोलिपटमा विभिन्न साइजका विरुवाहरु उत्पादन गर्न सकिनेछ । यो कार्यक्रम सुविधायुक्त नीजि वन नर्सरीहरुबाट समेत संचालन गर्न सकिनेछ । बिरुवा वितरण गर्दा सबै प्रकारका वनहरु जस्तैः सरकारद्धारा व्यवस्थित वन, सामुदायिक वन, निजी वनहरु आदिमा जनसहभागिता परिचालन गरी वृक्षारोपण गर्न अभिप्रेरित गरिनेछ ।

- जिल्लामा कुन कुन प्रजातिका बिरुवाहरुको माग छ सो को प्राथमिक सर्भेक्षण गरी माग बमोजिम र वृक्षारोपण गरिने क्षेत्रको लागि चाहिने बिरुवा संख्या र प्रजाति एकीन गर्नुपर्नेछ साथै सोही अनुसार बिरुवा उत्पादनको लागि कार्ययोजना (समयतालिका) तयार गर्नुपर्नेछ ।
- कार्यादेशमा कुन कुन प्रजातिका बिरुवा उत्पादन गर्नुपर्नेछ हो स्पष्ट रुपमा खुलाउनुपर्नेछ ।
- गुणस्तरयुक्त तथा स्थानियस्तरमा सफल भएका रुखविरुवाका बीउंलाई मात्र छनोट गर्नुपर्नेछ । उपलब्ध भएसम्म विभागबाट प्रमाणित गरिएको बीऊ खरिद वा संकलन गर्नुपर्नेछ ।

- यसरी उत्पादन हुने बिरुवा समुदायमा आधारित वन, सरकारद्धारा व्यवस्थित वन, सार्वजनिक तथा सरकारी जग्गामा वृक्षारोपण, वातावरण दिवस, वन महोत्सव जस्ता कार्यक्रम तथा सर्वसाधारणहरुलाई निजी वृक्षारोपणको लागि वितरण गरिनेछ ।
- बिरुवा उत्पादन तथा वितरणको लागि सर्भे, स्थलगत निरीक्षण, कार्ययोजना तयारी तथा रिपोर्टिङ लगायतका काममा आवश्यक पर्ने ईन्धन, खाजा खर्च र मसलन्द आदिमा यो शीर्षकबाट खर्च गर्न सकिनेछ । सो को लागि पहिला नै लगत इस्टिमेंटमा खुलाउनुपर्नेछ ।
- बिरुवा उत्पादन भई वितरण गर्दा वितरण लगत राखिनुपर्नेछ । बिरुवा वितरण गरिएको बिस्तृत विवरण अद्यावधिक गरेर राख्नुपर्नेछ । कार्यक्रम सम्पन्न पछि प्रगतिमा निम्न बुंदाहरु समावेश गर्नुपर्नेछ ।
    - ✓ उत्पादित विरुवाहरुको जात र संख्या
    - ✓ वितरणको लगत: सरकारद्वारा व्यवस्थित वन, सामुदायिक वन, निजी वन तथा आवादी जग्गामा, सार्वजनिक पर्ति जग्गामा रोपण गर्न
    - ✓ विभिन्न क्रियाकलापहरुको फोटो

**जनशक्ति व्यवस्थापन**

विरुवा उत्पादन (विभिन्न प्रकारका रुख, काष्ठ तथा बहुउपयोगी प्रजाति) कार्यक्रम संचालनको लागि सम्बन्धित डिभिजन/सब-डिभिजन वन कार्यालयहरूमा रहेका वन प्राविधिक मार्फत कार्यान्वयन गरिने छ ।

**वजेट व्यवस्थापन**

यो कार्य सम्पन्न गर्न नेपाल सरकार द्वारा कुल रकम रु ३,२९,२०,०००।- बिनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

लक्षित कार्यक्रम अनुसारको विरूवा उत्पादन भई वितरण हुनेछन् ।

## ३.२. नर्सरी मर्मत, सुधार तथा स्तर उन्नति

डिभिजन वन कार्यालय हरु तथा मातहत कार्यालयमा विगत देखि नै संचालनमा रहेका नर्सरीमा हुने सामान्य मर्मत तथा त्यस नर्सरीको क्षमता अभिवृद्धि गर्ने कार्यमा यो शीर्षकको रकम खर्च गर्न सकिनेछ । खर्च अनुमान गर्दा वन तथा भु-संरक्षण मंत्रालयको प्रचलित स्वीकृत नर्मस तथा प्रचलित जिल्ला दररेट बमोजिम गर्नुपर्नेछ । कार्य तालिका तयार गरी समयमै बजेट तथा अख्तियारी प्राप्त भएको अवस्थामा प्रथम चौमासिकको अवधिमा नर्सरी निर्माणको कार्यहरु गर्नु पर्नेछ । अस्थायी नर्सरी संचालन भएकोमा सो को स्तरोन्नति गरी स्थायी गर्नुपर्नेछ ।

नर्सरीमा सिचाँईको स्थायी व्यवस्था, नर्सरी सुरक्षाको लागि स्थायी तारवार वा पर्खाल, ओभरहेड वाटर टैंक, स्टोर हाउस, कम्पोष्ट पिट, सेडहाउस, ग्रिन हाउस, हरेक बेडमा पाईप जडान गरी स्पिरिङकल सिचाईको व्यवस्था, वत्तीको, प्रजातीको नाम प्लेट बोर्ड आदि व्यवस्था भएको हुनुपर्नेछ । नर्सरी मर्मत

तथा सुधार गर्दा गरिएका क्रियाकलापहरु स्पष्ट देखिने गरी देखिने गरी रजिष्टरको व्यवस्था गरिनु पर्दछ । नर्सरी राखिएको स्थानमा स्पष्ट देखिने गरी होर्डिङ्ग बोर्ड राख्नु पर्नेछ । कार्यक्रम सम्पन्न पछि प्रगतिमा निम्न बुंदाहरु समाबेश गर्नुपर्नेछ ।

- ✓ नर्सरी मर्मत गरिएको स्थान, फोटो तथा नक्शाहरु
- ✓ नर्सरीको पहिलेको क्षमता र अभिबृद्धि गरिएको भए हालको क्षमता
- ✓ मर्मत गर्दा लागेको खर्च

**जनशक्ति व्यवस्थापन**

नर्सरी मर्मत, सुधार तथा स्तर उन्नति कार्यक्रम संचालनको लागि सम्बन्धित डिभिजन/सब-डिभिजन वन कार्यालयहरू मार्फत कार्यान्वयन गरिने छ ।

**वजेट व्यवस्थापन**

यो कार्य सम्पन्न गर्न नेपाल सरकार द्वारा कुल रकम रु ५३,७५,०००।- बिनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

मौजुदा नर्सरीहरूको सुधार तथा स्तरउन्नति भई गुणस्तरिय विरूवा उत्पादनमा सहयोग पुग्नेछ ।

## ३.३. कृषि वन प्रणाली प्रवर्द्धन कार्यक्रम

निजी जग्गा/ सार्वजनिक तथा खस्केको वन क्षेत्रमा जमीनको उत्पादकत्वमा सुधार ल्याउन तथा स्थानीय जनताको आयआर्जनमा सहयोग पुर्याउनका लागि निजी जग्गा धनी तथा सहकारीको माध्यमबाट त्यस्ता क्षेत्रहरुमा हावापानी सुहाउँदो कृषि वन प्रणाली लागु गरिनेछ । यो कार्यक्रम लागि आवश्यक नीति तथा निर्देशिका तयारी तथा स्वीकृत पश्चात मात्र कार्यान्वयनमा लाने ।

निजी जग्गा/ सार्वजनिक तथा खस्केको वन क्षेत्रमा कृषि वन विकास कार्यक्रम

### क. निजी जग्गामा कृषिवन प्रवर्धन

- जिल्लामा कृषि वनको अभ्यास एवं सुरुवात गर्नुपर्नेछ । अगुवा किसानहरु, कृषि सहकारी मार्फत सम्भव भए तिनको क्लस्टर अनुसार स्थानीय तह अनुसार अनौपचारिक समूह वा नेटवर्क गठन गर्नुपर्नेछ ।
- नीजि जग्गामा कृषि वन प्रवर्धन गर्न आवश्यक डालेघाँस, जडीबुटी प्रजातिका विरुवा तथा वहुवर्षिय रुखहरु अमला, लंप्सी, वेल आदि, आँप, लिचि, कटहर जस्ता फलफूल प्रजातिका बिरुवाहरु साथै अम्रिसो र, एभोकाडा आदिका विरुवा वा उन्नत विउबिजन, प्राङ्गारिक जैविक मल आदि खरिद गर्नका लागि नगद अनुदान पनि दिन सकिनेछ ।
- कृषि वन सम्वन्धी फिल्ड स्तरिय कोचिङ्ग तथा उपलब्ध भए स्थानीयस्तरमा विद्यमान कृषक समूहसंग समन्वय गरी कार्य गर्नुपर्नेछ ।

- यो कृयाकलाप सम्पन्न गर्नुको लागि आवश्यक परेमा स्थानिय कृषि विकास कार्यालय, पशु सेवा कार्यालय तथा अन्य निकायसंग पनि समन्वय गर्न सकिनेछ ।
- कार्यक्रम संचालन गरेको समय, मिति, विवरण, सहभागी र सहयोगको विवरण उल्लेख गरी प्रतिवेदनमा समेत राख्नु पर्दछ ।

**ख. सार्वजनिक तथा खस्केको वन क्षेत्रमा कृषिवन प्रवर्धन**

- डिभिजन वन कार्यालयले आवश्यकता महशुस गरी प्रस्ताव गरेको सार्वजनिक तथा २० प्रतिशत भन्दा कम छत्र घनत्व (क्राउन कभर) भएको खस्केको वन, भू-संरक्षणको दृष्टिकोणबाट संवेदनशील क्षेत्र, सिमान्तकृत हैसियत खस्केको वन क्षेत्र, नदी वा नहर किनारमा, खाली सार्वजनिक स्थानमा समूहहरु परिचालन गरी कृषि वन विकासका लागि योजना (Implementation Plan) बनाई कार्यान्यनमा लगिनेछ ।
- उक्त क्षेत्रहरुमा डालेघाँस, जडीबुटी प्रजातिका विरुवा तथा वहुवर्षिय रुखहरु अमला, लप्सी, वेल आदि, आँप, लिचि, कटहर, अम्रिसो लगाएत स्थानीय रुख जडीबुटी प्रजातिका बिरुवा मात्र रोपण गर्न पाइने छ ।
- योजना तयार गर्दा वृक्षारोपण गरिने स्थान, क्षेत्रफल, बिरुवा संख्या, नक्शा, योजना, फोटोहरु आदि राख्नु पर्नेछ ।
- कार्यक्रम योजनाढंगले संचालन गरी अभिलेख खडा गरी कार्यक्रम सम्पन्न पछि प्रगति प्रतिवेदन डिभिजन वन कार्यालयमा बुझाउनु पर्नेछ ।
- कार्यक्रमको अनुगमन प्रदेश वन निर्देशनालय/डिभिजन वन कार्यालयले गर्नुपर्नेछ छ ।

**जनशक्ति व्यवस्थापन**

निजी जग्गा एवं सार्वजनिक तथा खस्केको वन क्षेत्रमा कृषिवन प्रवर्धन कायर्कम संचालनको लागि अगुवा किसानहरु, कृषि सहकारी समेतको संलग्नतामा अनौपचारिक समूह वा नेटवर्क गठन गरि स्थानीय तहमा रहेका कृषि, पशु विकासका प्राविधिकहरू समेतको सहयोगमा संचालन गर्न सकिने छ ।

**वजेट व्यवस्थापन**

कृषि वन प्रणाली प्रवर्द्धन कार्यक्रमका लागि आ.व. २०७५/७६ मा रु. ३२६२५०००।- वजेट व्यवस्था गरेको छ।

**अपेक्षित उपलब्धि**

- निजी एवं सार्वजनिक तथा खस्केको वन क्षेत्रमा हरियाली प्रवर्धन भई जमिनको हैसियतमा सुधार हुनेछ ।
- विभिन्न प्रजातिका डालेघाँस, जडिबुटी तथा फलफुलको प्रवर्धनबाट स्थानिय ब्यक्ति/समुदायको आयआर्जनमा टेवा पुग्नेछ ।

३.४. हरियालि प्रवर्द्धन कार्यक्रम (स्वच्छ वातावरण महाअभियान)

यस कार्यक्रममा विनियोजित रकम निजी, सामुदायिक वन, धार्मिक वन, कबुलियती वन,साझेदारी वनमा वृक्षारोपण साथै सार्वजनिक पर्ति जग्गामा वृक्षारोपण तथा उद्ध्यान निर्माण गर्न र हरियाली प्रवर्धनका लागि सहयोगी कृयाकलापहरु जस्तै पोष्टर प्रकाशन, स्कूल शिक्षा कार्यक्रम, सचेतना, दिवश समारोहमा खर्च गर्न सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

हरियालि प्रवर्द्धन कार्यक्रम (स्वच्छ वातावरण महाअभियान) संचालनको लागि डिभिजन वन कार्यालयले स्थानिय वन समुहहरू, स्थानिय निकायहरू, सामजिक संस्थाहरू निजी क्षेत्र समेतको सहकार्यमा संचालन गर्न सकिने छ ।

**वजेट व्यवस्थापन**

हरियालि प्रवर्द्धन कार्यक्रम (स्वच्छ वातावरण महाअभियान) कार्यक्रमका लागि आ.व. २०७५/७६ मा रु. २१३३००००|- वजेट व्यवस्था गरेको छ ।

**अपेक्षित उपलब्धि**

निजी, सामुदायिक वन, धार्मिक वन, कबुलियती वन, साझेदारी वन एवं सार्वजनिक पर्ति जग्गामा वृक्षारोपण तथा उद्ध्यान निर्माण मार्फत हरियालि प्रवर्द्धन भई स्वच्छ वातावरण महाअभियानमा टेवा पुग्नेछ ।

३.५. निजी नर्सरी स्थापनाका लागि अनुदान

जिल्लामा नर्सरी नभएका क्षेत्रमा कम्तिमा ४०००० भन्दा बढी विरुवा उत्पादन हुनेगरी नयाँ नर्सरी स्थापना गर्न चाहने नर्सरीधनीलाई आवश्यक प्रजातिका गुणस्तरीय विरुवा तोकिएको मूल्यमा बिक्री वितरण गर्नुपर्नेछ गरी सम्झौता गरी सिँचाई तथा बोरिङ्ग अनुदान स्वरुप प्रति नर्सरी नगद रु. एक लाखसम्म अनुदान दिन सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

निजी नर्सरी स्थापनाका लागि अनुदान कार्यक्रम संचालनको लागि स्थानिय स्तरमा निजी वन नर्सरी संचालन गरीरहेका र गर्न चाहने व्यक्ति वा निजी संस्थाहरुसँग समन्वय गरी आवश्यक प्राविधिक सहयो उपलब्ध गराई संचालन गर्न सकिने छ ।

**वजेट व्यवस्थापन**

हरियालि प्रवर्द्धन कार्यक्रम (स्वच्छ वात्ावरण महाअभियान) कार्यक्रमका लागि आ.व. २०७५/७६ मा रु. ९४५००००|- वजेट व्यवस्था गरेको छ ।

**अपेक्षित उपलब्धि**

- निजीस्तरमा गुणस्तरिय बिरुवा उत्पादन भई सर्व सुलभरूपमा उपलब्ध हुनेछ ।
- निजी कृषकहरूको व्यवसायिकता, उद्यमशिलतामा अभिवृद्धि हुनेछ ।

**३.६. वृक्षारोपण (बारबेर, गोडमेल, पुनरोपण, संरक्षण अनुदान समेत)**

यस कार्यक्रम अन्तर्गत वृक्षारोपणको लागि उपलब्ध जग्गाहरु गाउँमा भएका सार्वजनिक पर्ति जग्गा एवं नदी उकासबाट प्राप्त जग्गाहरु हुन सक्छन् । यस कार्यक्रम अन्तर्गत उपलब्ध हुने जग्गा स–साना टुक्रामा विभाजित हुन सक्ने भएकोले यहाँ गरिएको वृक्षारोपणको संरक्षण कार्य केही खर्चिलो हुन सक्छ । त्यसैले यस्ता वृक्षारोपणको व्यवस्थापनका लागि स्थानीय संघसंस्था परिचालन, उपभोक्ता समूहको गठन वा विपन्न वर्गको समूह गठन गरी केही समयका लागि अन्तरबाली लगाउन दिई सोही समूह मार्फत् वृक्षारोपण संरक्षण एवं व्यवस्थापन गर्न पनि सकिनेछ । वृक्षारोपण सफल बनाउन सम्भव भएसम्म सबै (बारबेर, गोडमेल, पुनरोपण, सिँचाई, हेरालु आदिको) उपाय अवलम्वन गरिनु पर्दछ । वृक्षारोपण गर्नु अघि जग्गाको स्वामित्व भएको निकाय र संघसंस्था वा समूहबीच सम्झौता गर्नु पर्नेछ । बस्ती देखि टाढा रहेका सरकारी एवं नाङ्गा वन क्षेत्रमा वृक्षारोपण एवं यसको व्यवस्थापन सेवा प्रदायक मार्फत समेत गर्न सकिनेछ ।

**वृक्षारोपण क्षेत्रको कार्ययोजना:** हरेक वृक्षारोपण क्षेत्रको सम्बन्धित सरोकारवालाहरुसँग छलफल गरी कार्ययोजना बनाईनेछ । जसमा वृक्षारोपण क्षेत्रको नक्सासहितको सम्पूर्ण विवरण, वृक्षारोपणको संरक्षण, सम्वर्धन एवं सदुपयोगको लागि गरिने कार्यहरुको विस्तृत विवरण उल्लेख गर्नु पर्दछ । कार्ययोजनामा कुन जातका के कति विरुवा कति दूरीमा लगाउने, वन व्यवस्थापन तथा संरक्षणको व्यवस्था के कसरी गर्नुपर्नेछ , वन पैदावारको बिक्री वितरणको व्यवस्था के कसरी हुने, लाभको बाँडफाँड कसरी गर्नुपर्नेछ आदि सबै कुरा स्पष्टरुपमा उल्लेख हुनु पर्दछ । यो कार्ययोजना डिभिजन वन अधिकृतले स्वीकृत गर्नुपर्नेछ छन् ।

**वृक्षारोपण क्षेत्रको संरक्षण:** वृक्षारोपण संरक्षणको लागि बारबेर गर्दा सकेसम्म स्थानीयरुपमा उपलब्ध जैविक सामाग्रीहरु जस्तैः सजिवन, निलकाँडा, बाँस आदिको प्रयोग गर्नुपर्दछ र आवश्यकता अनुसार वन हेरालुको समेत व्यवस्था मिलाउनु पर्दछ । यसमा वन व्यवस्थापन तथा संरक्षण गर्न जिम्मा पाएको संघसंस्था, उपभोक्ता समूह, सेवा प्रदायक वा हेरालुलाई वृक्षारोपण क्षेत्रको व्यवस्थापनको अवस्था र बाँचेका विरुवाको संख्याको आधारमा बढीमा तीन वर्षसम्म संरक्षण अनुदान/पारिश्रमिक दिन सकिनेछ

**वृक्षारोपण क्षेत्रमा होर्डिङ्ग बोर्ड:** वृक्षारोपण कार्यक्रम सम्पन्न भएपछि वृक्षारोपण सम्बन्धि तथ्याङ्कहरु भएको होर्डिङ्ग बोर्ड तयार गरी राख्नु नेछ ।

**जनशक्ति व्यवस्थापन**

वृक्षारोपण (बारबेर, गोडमेल, पुनरोपण, संरक्षण अनुदान समेत) कार्यक्रम संचालनको लागि डिभिजन वन कार्यालयले स्थानिय वन उपभोक्ता समुह, स्थानिय तह एवं सरोकारवालाहरूको सहयोगमा संचालन गर्न सकिने छ ।

**वजेट व्यवस्थापन**

हरियालि प्रवर्द्धन कार्यक्रम (स्वच्छ वातावरण महाअभियान) कार्यक्रमका लागि आ.व. २०७५/७६ मा रु. ३७६०००००।- वजेट व्यवस्था गरेको छ ।

**अपेक्षित उपलब्धि**

- सरकारी एवं नाङ्गा वन क्षेत्र, सार्वजनिक पर्ति जग्गा एवं नदी उकासबाट प्राप्त जग्गाहरुमा बृक्षरोपण भई वन क्षेत्र बृद्धि हुनेछ ।
- रोपण गरिएका विरूवाहरूको बाँच्ने हुर्कने संभावना बढेर जानेछ ।

**३.७. निजी वन दर्ता गर्न लाग्ने राजस्व खर्च अनुदान (५००० प्रति वन)**

निजी वन दर्ता गर्न जाँदा साँध सिमाना नापजाँच गर्न सरकारी अमिनको आवश्यक पर्ने हुँदा सोका लागि जिल्लास्थित नापी कार्यालयलाई नियमानुसार बुझाउनु पर्ने राजस्व स्वरुप यस शीर्षक अन्तर्गत राखिएको बजेटबाट खर्च गरिनेछ । यसका साथै कर्मचारीको स्थलगत भ्रमण, यातायात, मसलन्द, दैनिक भ्रमण भत्ता आदि समेत यसबाट खर्च गर्न सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

निजी वन दर्ता गर्ने प्रयोजनको लागि डिभिजन वन कार्यालय, नापी कार्यालय, स्थानिय तह, निजी वन धनी तथा निजी वन संजाल आदिको सहयोगमा यो कार्यक्रम संचालन गर्नु पर्नेछ ।

**वजेट व्यवस्थापन**

हरियालि प्रवर्द्धन कार्यक्रम (स्वच्छ वातावरण महाअभियान) कार्यक्रमका लागि आ.व. २०७५/७६ मा रु. ७८५००००।- वजेट व्यवस्था गरेको छ ।

**अपेक्षित उपलब्धि**

- निजी वन दर्ता गर्ने धनीहरूको संख्यामा अभिवृद्धि भई वन पैदावारको आपूर्ति तथा ओसारपसारमा सहजता हुनेछ ।

**३.८. स्थानीय वन समूह र सा.व.उ.स. मार्फत बिरुवा उत्पादन सहयोग र अनुदान (वस्तुगत र नगद)**

डिभिजन वन कार्यालय ले वृक्षारोपण योजना अनुरुप वृक्षारोपण गर्न स्थानीय हावापानी सुहाँउदो प्रजातिका विरुवा सामुदायिक वनहरु सँग सम्झौता गरी त्यस्ता सामुदायिक वन उपभोक्ता समूह मार्फत उत्पादन गर्न सकिनेछ । सम्झौता बमोजिमका खरीद गर्दा विरुवाको गुणस्तर चेकजाँच गरी विरुवा कसलाई वितरण गरियो र कहाँ रोपिएका हुन् सो को अभिलेखसमेत राख्नु पर्दछ ।

**जनशक्ति व्यवस्थापन**

स्थानीय वन समूह र सा.व.उ.स. मार्फत ब्रिरुवा उत्पादन सहयोग र अनुदान (वस्तुगत र नगद) कार्यक्रमका लागि सम्बन्धित डिभिजन/सब-डिभिजन वन कार्यालयहरूको प्राविधिक सहयोगमा कार्यान्वयन गरिने छ ।

**वजेट व्यवस्थापन**

हरियालि प्रवर्द्धन कार्यक्रम (स्वच्छ वातावरण महाअभियान) कार्यक्रमका लागि आ.व. २०७५/७६ मा रु. १२१७००००|- वजेट व्यवस्था गरेको छ ।

**अपेक्षित उपलब्धि**

- समुदायस्तरमा गुणस्तरिय विरूवा उत्पादन भई सर्व सुलभरूपमा उपलब्ध हुनेछ साथै बृक्षरोपण कार्यमा सहयोग पुग्नेछ।
- स्थानिय वन समुहहरूको ब्यवसायिकता, उद्यमशिलतामा अभिवृद्धि हुनेछ ।

## ३.९. कृषि वन विकास तथा विस्तार कार्यक्रम

निजी व्यक्तिको हकभोगको जग्गा/सार्वजनिक तथा खस्केको वन क्षेत्रमा जमीनको उत्पादकत्वमा सुधार ल्याउन तथा स्थानीय जनताको आयआर्जनमा सहयोग पुर्याउनका लागि निजी क्षेत्र तथा सहकारीको माध्यमबाट त्यस्ता क्षेत्रहरुमा हावापानी सुहाउँदो कृषि वन प्रणाली लागु गरिनेछ । यस कार्यकालागि स्थानीय जलवायु सुहाउँदा एग्रोइकोलोजिकल क्षेत्रका आधारमा कृषि तथा वन वालीको निर्कयौल गरिनेछ ।

नीजि जग्गामा वन बाली लगाइ कृषि वन गर्न कानूनतः अप्ठेरो नभएपनि हैसियत विग्रेको वन क्षेत्रमा कृषि वाली लगाउन प्रचलित कानूनमा समेत सुधार गर्नु पर्ने हुनसक्ने भएकोले यो कार्यक्रम लागि आवश्यक नीति तथा निर्देशिका तयारी तथा स्वीकृत पश्चात मात्र कार्यान्वयनमा लगिनेछ। निजी जग्गा/सार्वजनिक तथा खस्केको वन क्षेत्रमा कृषि वन विकास कार्यक्रम

### ३.९.१ निजी क्षेत्रमा कृषिवन विकास तथा विस्तार

- जिल्लामा कृषि वनको अभ्यास एवं सुरुवात गर्नुपर्नेछ अगुवा किसानहरु, कृषि सहकारी मार्फत सम्भव भए तिनको क्लस्टर अनुसार स्थानीय तह अनुसार अनौपचारिक समूह वा नेटवर्क गठन गर्नुपर्नेछ ।
- नीजि जग्गामा कृषि वन प्रवर्धन गर्न आवश्यक डालेघाँस, जडीबुटी प्रजातिका विरुवा तथा वहुवर्षिय रुखहरु अमला, लप्सी, वेल, आँप, लिचि, रुख कटहर, आदि जस्ता वहुवर्षिय फलफूल प्रजातिका बिरुवाहरु साथै अम्रिसो र, एभोकाडो आदिका विरुवा वा उन्नत विउबिजन, प्राङ्गारिक जैविक मल आदि खरिद गर्नका लागि नगद अनुदान दिन सकिनेछ ।

- कृषि वन सम्वन्धी फिल्ड स्तरिय कोचिङ्ग तथा उपलब्ध भए स्थानीयस्तरमा विद्यमान कृषक समूहसंग समन्वय गरी कार्य गर्नुपर्नेछ ।
- यो कृयाकलाप सम्पन्न गर्नका लागि आवश्यक परेमा स्थानीय कृषि तथा पशु सेवा सम्बन्धी कार्य गर्ने कार्यालय तथा अन्य निकायसंग पनि समन्वय गर्न सकिन्नेछ ।
- कार्यक्रम संचालन गरेको समय, मिति, विवरण, सहभागी र सहयोगको विवरण उल्लेख गरी प्रतिवेदनमा समेत राख्नु पर्दछ ।

**३.९.२ सार्वजनिक तथा खस्केको वन क्षेत्रमा कृषिवन विकास विस्तार**

- डिभिजन वन कार्यालयले आवश्यकता महशुस गरी प्रस्ताव गरेको सार्वजनिक तथा २० प्रतिशत भन्दा कम छत्र घनत्व (क्राउन कभर) भएको खस्केको वन, भू–संरक्षणको दृष्टिकोणबाट संवेदनशील क्षेत्र, सिमान्तकृत हैसियत खस्केको वन क्षेत्र, नदी वा नहर किनारमा, खाली सार्वजनिक स्थानमा समूहहरु परिचालन गरी कृषि वन विकासका लागि योजना (Implementation Plan) बनाई कार्यान्यनमा लगिनेछ ।
- उक्त क्षेत्रहरुमा डालेघाँस, जडीबुटी प्रजातिका विरुवा तथा वहुवर्षिय रुखहरु अमला, लप्सी, वेल आदि, आँप, लिचि, कटहर, अम्रिसो लगाएत स्थानीय रुख जडीबुटी प्रजातिका बिरुवा मात्र रोपण गर्न पाइने छ ।
- योजना तयार गर्दा वृक्षारोपण गरिने स्थान, क्षेत्रफल, बिरुवा संख्या, नक्शा, योजना, फोटोहरु आदि राख्नु पर्नेछ ।
- कार्यक्रम योजनाढंगले संचालन गरी अभिलेख खडा गरी कार्यक्रम सम्पन्न पछि प्रगति प्रतिवेदन डिभिजन वन कार्यालयमा बुझाउनु पर्नेछ ।
- कार्यक्रमको अनुगमन प्रदेश वन निर्देशनालय/डिभिजन वन कार्यालयले गर्नुपर्नेछ छ ।

**जनशक्ति व्यवस्थापन**

निजी जग्गा एवं सार्वजनिक तथा खस्केको वन क्षेत्रमा कृषिवन प्रवर्धन कायर्कम संचालनको लागि अगुवा किसानहरु, कृषि सहकारी समेतको संलग्नतामा अनौपचारिक समूह वा नेटवर्क गठन गरि स्थानीय तहमा रहेका कृषि, पशु विकासका प्राविधिकहरू समेतको सहयोगमा संचालन गर्न सकिने छ ।

**वजेट व्यवस्थापन**

हरियालि प्रवर्द्धन कार्यक्रम (स्वच्छ वातावरण महाअभियान) कार्यक्रमंका लागि आ.व. २०७५/७६ मा रु. ७००००००।- वजेट व्यवस्था गरेको छ ।

**अपेक्षित उपलब्धि**

- निजी एवं सार्वजनिक तथा खस्केको वन क्षेत्रमा स्थानिय हावापानी सुहाँउदो बोट विरूवाहरूको बृक्षरोपणबाट हरियाली प्रवर्धन भई जमिनको हैसियतमा सुधार हुनेछ ।

- विभिन्न प्रजातिका डालेघाँस, जडिबुटी तथा फलफुलको प्रवर्धनबाट स्थानिय व्यक्ति/समुदायको आयआर्जनमा टेवा पुग्नेछ।

## ४. जडीवुटी विकास कार्यक्रम (कर्णाली जडिबुटी प्रशोधन समेत) (व.उ.शि.नं ३२९१०२)

महत्वपूर्ण जडीबुटी स्रोतहरुको दीगो संरक्षण र विकासका लागि परम्परादेखि यसको संकलनवाट जीविकोपार्जन गर्दै आएका विपन्न तथा पिछडिएका वर्गलाई खेती विस्तार र उद्यम विकासमा सहभागी गराई आयआर्जनका अवसरवाट गरीबी न्यूनीकरण र समतामूलक विकासमा समेत सघाउ पुर्याउने सोचका साथ जडीवुटी विकास कार्यक्रम आ.व. २०६६/६७ देखि सञ्चालनमा रहेको छ । हाल ५६ वटा जिल्लाहरुमा यो कार्यक्रम संचालनमा छ । यो कार्यक्रम विशेष रुपमा जडीवुटीको बाहुल्यता रहेको मध्य तथा सुदूर पश्चिमका पहाडी तथा हिमाली जिल्लाहरुमा केन्द्रीत रहेको छ र सामान्य रुपमा जडीबुटी पाइने अन्य जिल्लामा समेत सञ्चालित छ ।

### ४.१. जडीबुटी विरुवा उत्पादन

वनक्षेत्रलाई जैविक विविधतायुक्त बनाउन, बैकल्पिक आयस्रोतको रुपमा विकास गर्न जडीबुटी तथा गैरकाष्ठ प्रजातिका बिरुवा उत्पादन गरी वृक्षारोपण गर्न अभिप्रेरित गर्नुपर्नेछ र जडीबुटी तथा गैरकाष्ठ वन पैदावारको आपूर्ति र उत्पादनमा अभिबृद्धि भई आयआर्जन तथा जीबिकोपार्जनमा सुधार पुर्याउने उद्देश्यबाट यो क्रियाकलाप संचालन गरिनेछ । बिरुवा वितरण गर्दा सबै प्रकारका वनहरु जस्तैः सरकारद्धारा व्यवस्थित वन, सामुदायिक वन, निजी वन, कवुलियती वन, संरक्षित वन, साझेदारी वन आदिमा जनसहभागिता परिचालन गरी वृक्षारोपण गर्न अभिप्रेरित गरिनेछ ।

जडीबुटी तथा गैरकाष्ठ प्रजाति उत्पादन गर्दा उच्च मूल्य, बजारमा माग भएको र स्थानीय किसानको रुचि अनुसारको प्रजातिहरुको सर्भेक्षण गरी सो को सूची बनाई उत्पादन गर्नुपर्नेछ । नर्सरीमा बिरुवा उत्पादन गर्दा स्थानीय आवश्यकता अनुसार तथा व्यवसायिक महत्वपूर्ण जडीबुटी प्रजाति, सुगन्धित घाँस तथा बाँस कलमी बिरुवा उत्पादन गर्नुपर्छ ।

जडीबुटी विकास कार्यक्रमको हकमा फोकल टीमले छनौट गरेको जडीवुटी प्रजातिको बिरुवा उत्पादन गर्नुपर्नेछ । जडीबुटीको खेतीको लागि बिशेष क्षेत्र छनौट गरी उक्त क्षेत्रमा वृक्षारोपणको लागि बहुमूल्य र ठाउँ बिशेष जडीबुटी जस्तै टिमुर, जैतुन, तेजपात, अमला, घिऊकुमारी आदि जातका बिरुवा उत्पादनमा जोड दिनुपर्नेछ, साथै यसप्रकारका बिरुवाहरु उत्पादन गर्नुपर्नेछ सम्भावना नदेखिएमा रुख प्रजातिका गैरकाष्ठ वन पैदावार जस्तै लप्सीं, ओखर, लौठसल्ला आदि जस्ता बिरुवाहरु अन्यत्र नर्सरीबाट खरिद गर्नुपर्नेछ । जडीबुटी प्रजाति उत्पादन गर्दा बिशेष किसिमको तालिमको आवश्यकता पर्ने भएमा सो को समेत व्यवस्था मिलाउनुपर्नेछ ।

नेपाल राजपत्र खण्ड ६४, संख्या ११, भाग ५ मिति २०७१/०३/३० मा प्रकाशित सूचनामा उल्लेखित प्रजातिहरु उत्पादन गरी गरिबी न्यूनीकरण, सामुदायिक वन उपभोक्ता समूहलाई निशुल्क र अन्यको हकमा वितरण गर्नुपरेमा उक्त राजपत्र बमोजिमको मूल्य लिई मात्र वितरण गर्न सकिनेछ ।

### जनशक्ति व्यवस्थापन

जडिबुटि विरुवा उत्पादनका लागि देशै भरका डिभीजन वन कार्यालय तथा सव डिभीजन वन कार्यालय का कर्मचारीहरु परिचालित हुनेछन् । वन तथा भू सरक्षण विभाग र प्रदेश मन्त्रालयबाट तथा वन निर्देशनालयबाट आवश्यकतानुसार प्राविधिक तथा अन्य सहयोग उपलब्ध गराइनेछ ।

**बजेट व्यवस्थापन** : यस कार्यक्रमका लागी जम्मा रु ४,२०,००,००० बजेट विनियोजन गरिएको छ ।

### अपेक्षित उपलब्धि

- करीव ४२ लाख विभिन्न प्रकारका जडिबुटी विरुवाको उत्पादन तथा वितरण भएको हुने ।

### ४.२. नर्सरी मर्मत

डिभिजन वन कार्यालयहरु तथा मातहत कार्यालयमा विगतका आ.व. देखि नै संचालनमा रहेका नर्सरीमा हुने सामान्य मर्मत तथा त्यस नर्सरीको क्षमता अभिवृद्धि गर्न गर्नु पर्ने कार्य संचालन गर्न यो क्रियाकलाप संचालन गरीने छ । खर्च अनुमान गर्दा वन तथा भु–संरक्षण मंत्रालयको प्रचलित स्वीकृत नर्मस तथा प्रचलित जिल्ला दररेट बमोजिम गर्नुपर्नेछ । कार्य तालिका तयार गरी समयमै बजेट तथा अख्तियारी प्राप्त भएको अवस्थामा प्रथम चौमासिकको अवधिमा नर्सरी निर्माणको कार्यहरु गर्नु पर्नेछ ।अस्थायी नर्सरी संचालन भएकोमा सो को स्तरोन्नति गरी स्थायी गर्नुपर्नेछ ।

नर्सरीमा सिचाँईको स्थायी व्यवस्था, नर्सरी सुरक्षाको लागि स्थायी तारवार वा पर्खाल, ओभरहेड वाटर टैक, स्टोर हाउस, कम्पोष्ट पिट, सेडहाउस, ग्रिन हाउस, हरेक बेडमा पाईप जडान गरी स्पिरिङ्कल सिचाईको व्यवस्था, वत्तीको, प्रजातीको नाम प्लेट बोर्ड आदि व्यवस्था भएको हुनुपर्नेछ । नर्सरी मर्मत तथा सुधार गर्दा गरिएका क्रियाकलापहरुको स्पष्ट देखिने गरी रजिष्टरको व्यवस्था गरिनुपर्दछ । नर्सरी राखिएको स्थानमा स्पष्ट देखिनेगरि नामाकरण गरी ीबथयगतदेखिने गरी होर्ड्डीड. बोर्ड राख्ने । कार्यक्रम सम्पन्न पछि प्रगतिमा निम्न बुंदाहरु समाबेश गर्नुपर्नेछ ।

- नर्सरी मर्मत गरिएको स्थान, फोटो तथा नक्शाहरु बिथयगत समेत
- नर्सरीको पहिलेको क्षमता र अभिबृद्धि गरिएको भए हालको क्षमता
- मर्मत गर्दा लागेको खर्च

### जनशक्ति व्यवस्थापन

यस कार्यक्रमका लागि देशै भरका डिभीजन वन कार्यालय तथा सव डिभीजन वन कार्यालय का कर्मचारीहरु परिचालित हुनेछन् । वन तथा भू सरक्षण विभाग र प्रदेश मन्त्रालयबाट तथा वन निर्देशनालयबाट आवश्यकतानुसार प्राविधिक तथा अन्य सहयोग उपलब्ध गराइनेछ ।

**बजेट व्यवस्थापन** : यस कार्यक्रमका लागी जम्मा रु २१,०५,००० बजेट विनियोजन गरिएको छ ।

### अपेक्षित उपलब्धि

- करीव ४२ वटा नर्सरीको मर्मत भएको हुने ।

४.३. पकेट क्षेत्रमा जडीबुटी खेती विस्तार

- फोकल टिमले तोकिएको प्रजातिको पकेट क्षेत्र पहिचान गर्नुपर्नेछ ।
- छानिएका पकेटक्षेत्रमा खेती विस्तार गर्नका लागि पत्रिका, सार्वजनिक जनसम्पर्कका कार्यालय र पकेट क्षेत्रका स्थानीय मा १५ देखि ३० दिने सूचना प्रकाशन गरी प्रस्ताव आह्वान गर्नुपर्नेछ ।
- इच्छुक उद्यमी, सामुदायिक तथा कवुलियती वन समूह, वा किसानले प्रकाशित सूचना वमोजिम डिभिजन वन कार्यालय मा प्रस्ताव पेश गर्नुपर्नेछ ।
- प्रस्ताव छनौटको मापदण्ड तयार गरी फोकल टिमले बढिमा १० वटा सम्म उत्कृष्ठ प्रस्ताव छनौट गरी डिभिजन वन कार्यालय लाई सिफारिस गर्नुपर्नेछ । मापदण्ड तयार गर्दा व्यावसायिक उत्पादन गर्न सक्ने क्षमता, बजारको पहुँच, प्रस्तावकको लगानी प्रतिशत, वैदेशिक रोजगारीबाट फर्किएका युवा र अनुभव लगायतका विषयलाई ध्यान दिने ।
- फोकल टिमको सिफारिसको आधारमा डिभिजन वन कार्यालयले खेति विस्तारका लागि सम्झौता गर्नुपर्नेछ ।
- कार्य संचालन गर्न प्रथम किस्ता स्वरुप ७५ प्रतिशत र अन्तिम प्रतिवेदन प्राप्त भएपश्चात वांकि २५ प्रतिशत रकम भुक्तानी गर्नुपर्नेछ ।
- कार्य सम्पन्न भएपछि कार्यस्थलको फोटो (जग्गाधनी वा सामुदायिक वन उपभोक्ता समूहको हकमा उपभोक्ता समेतको) पश्चात कार्यस्थलको अवस्थिति (जि.पि.एस) सुचक सहितका अन्य उपलब्धि/प्रभावकारिता सहितको आर्थिक र प्राविधिक प्रगति प्रतिवेदन प्रस्तुत गर्नुपर्नेछ ।
- प्राविधिक प्रगति प्रतिवेदनमा समावेश हुनपर्ने कुराहरु,
    - ✓ जग्गाको कित्ता नं., फिल्डबुक, नक्सा, क्षेत्रफल, GPS Waypoints
    - ✓ वृक्षारोपण गरिएका विरुवा संख्या र प्रजाति

अनुगमन, निरीक्षण प्रतिवेदनमा फोकल टिमका कम्तीमा २ जना सदस्यको हस्ताक्षर अनिवार्य रुपमा हुनुपर्नेछ । यसरी वृक्षारोपण गरिएको ठाउँमा यी विवरणहरु सहितको एउटा होर्डिङ्ग बोर्ड समेत राख्नुपर्नेछ ।

**जनशक्ति व्यवस्थापन**

यस कार्यक्रमंका लागि देशै भरका डिभीजन वन कार्यालय तथा सव डिभीजन वन कार्यालय का कर्मचारीहरु परिचालित हुनेछन् । वन तथा भू सरक्षण विभाग र प्रदेश मन्त्रालयबाट तथा वन निर्देशनालयबाट आवश्यकतानुसार प्राविधिक तथा अन्य सहयोग उपलब्ध गराइनेछ ।

**बजेट व्यवस्थापन :** यस कार्यक्रमका लागी जम्मा रु ३,११,५०,००० बजेट विनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- करीव ३११ हेक्टर क्षेत्रमा जडिबुटीको खेति विस्तार भएको हुने ।

### ४.४. जडीबुटी उत्पादक संकलक तथा व्यापारी बिच अन्तरक्रिया गोष्ठी

जडीबुटीसँग सम्वन्धित व्यवसायीलाई अझ बढी व्यवस्थित बनाउनका लागि र उत्पादक र व्यापारीवीच राम्रो सम्वन्ध विकास गर्न तथा एकअर्काको समस्या र समाधानका उपाय पनि दुबै पक्षको प्रत्यक्ष छलफलबाट निस्कियोस भन्नकालागि दुबै पक्षहरु समावेश गरी अन्तरक्रिया कार्यक्रम संचालन गर्नु पर्नेछ । यसमा विनियोजित रकम प्रचलित नर्मस अनुसार खर्च गर्नुपर्नेछ ।

**जनशक्ति व्यवस्थापन**

यस कार्यक्रमका लागि देशै भरका डिभीजन वन कार्यालय तथा सव डिभीजन वन कार्यालय का कर्मचारीहरु परिचालित हुनेछन् । वन तथा भू सरक्षण विभाग र प्रदेश मन्त्रालयबाट तथा वन निर्देशनालयबाट आवश्यकतानुसार प्राविधिक तथा अन्य सहयोग उपलब्ध गराइनेछ ।

**बजेट व्यवस्थापन** : यस कार्यक्रमका लागी जम्मा रु २६,००,००० बजेट विनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- जडीबुटी उत्पादक संकलक तथा व्यापारी बिच करीव ५२ वटा अन्तरक्रिया गोष्ठी भएको हुने ।

### ४.५. फोकल टिम बैठक

वन तथा वातावरण मन्त्रालयबाट २०६९ सालमा तयार भएको कार्यबिधि अनुसार जिल्लास्तरमा गठन भएको फोकल टिमको बैठक आवश्यकता अनुसार बस्नु पर्नेछ र सो बैठक संचालन तथा व्यवस्थापनमा यो शीर्षकको रकम खर्च गर्न सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

यस कार्यक्रमका लागि देशै भरका डिभीजन वन कार्यालय तथा सव डिभीजन वन कार्यालय का कर्मचारीहरु परिचालित हुनेछन् । वन तथा भू सरक्षण विभाग र प्रदेश मन्त्रालयबाट तथा वन निर्देशनालयबाट आवश्यकतानुसार प्राविधिक तथा अन्य सहयोग उपलब्ध गराइनेछ ।

**बजेट व्यवस्थापन** : यस कार्यक्रमका लागी जम्मा रु ४७,३०,००० बजेट विनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- करीव १५७ वटा फोकल टिमको बैठक भएको हुने ।

### ४.६. जडीबुटी उत्पादन, खेती विस्तार, भण्डारण

निजी हकभोकको जग्गामा व्यवसायिक जडीबुटी उत्पादन तथा खेती विस्तार बुँदा नं. ४.३ मा भएको व्यवसथा अनुसार गर्नु पर्नेछ । भण्डारण क्षेत्र निर्माणको हकमा बुंदा नं. ४.८.१. मा भएको व्यवस्था अनुसार गर्नु पर्नेछ ।

**जनशक्ति व्यवस्थापन**

यस कार्यक्रमका लागि देशै भरका डिभीजन वन कार्यालय तथा सव डिभीजन वन कार्यालय का कर्मचारीहरु परिचालित हुनेछन् । वन तथा भू सरक्षण विभाग र प्रदेश मन्त्रालयबाट तथा वन निर्देशनालयबाट आवश्यकतानुसार प्राविधिक तथा अन्य सहयोग उपलब्ध गराइनेछ ।

**बजेट व्यवस्थापन** : यस कार्यक्रमका लागी जम्मा रु ७,००,००,००० बजेट विनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- करीव ३५० हेक्टर जग्गामा जडिबुटी खेती विस्तार र १७ वटा भण्डारण केन्द्र स्थापना भएको हुने ।

**४.७. सहकारी मार्फत जडीबुटीका उत्पादन खेती विस्तार, भण्डारण, प्रशोधन र बजारीकरण**

यस कार्यक्रमका लागि छुट्याईएको रकमका डिभिजनको कार्यक्षेत्रको फोकल टिम र सहकारीसँग सहकार्य गरी हावापानी र भौगोलिक अवस्था सुहाउँदो जडीबुटी प्रजातिहरु उत्पादन गर्ने, खेती विस्तार गर्ने र संकलन हुने जडीबुटीको भण्डारण,प्रशोधन र वजारीकरण गर्नमा सहयोगी हुने खालका पुर्वाधारहरुको निर्माण तथा व्यवस्थापनमा यस शीर्षकको रकम खर्च गर्न सकिनेछ । सहकारीसँग सहकार्य गरी जडीबुटी भण्डारण स्थल तथा प्रशोधन केन्द्र स्थापनाका लागि हकमा बुंदा नं. ४.८.१. मा भएको व्यवस्था अनुसार गर्नु पर्नेछ ।

**जनशक्ति व्यवस्थापन**

यस कार्यक्रमका लागि देशै भरका डिभीजन वन कार्यालय तथा सव डिभीजन वन कार्यालय का कर्मचारीहरु परिचालित हुनेछन् । वन तथा भू सरक्षण विभाग र प्रदेश मन्त्रालयबाट तथा वन निर्देशनालयबाट आवश्यकतानुसार प्राविधिक तथा अन्य सहयोग उपलब्ध गराइनेछ ।

**बजेट व्यवस्थापन** : यस कार्यक्रमका लागी जम्मा रु १४,००,००,००० बजेट विनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- करीव ३४ वटा जडिबुटी भण्डारण तथा प्रशोधन केन्द्र स्थापना ७०० हेक्टर जग्गामा जड़िबुटी खेती विस्तार र भएको हुने ।

**४.८. जडिबुटी भण्डारण तथा प्रशोधन केन्द्र स्थापना विरुवा उत्पादन (हजारमा)**

यस शीर्षकमा विनियोजित रकम विरुवा उत्पादनको हकमा बुँदा नं. ४.३. र भण्डारण र प्रशोधन केन्द्र स्थापनाको हकमा बुंदा नं. ४.८.१. मा भएको व्यवस्था अनुसार गर्नु पर्नेछ ।

**४.८.१. जडीबुटी भण्डारण तथा प्रशोधन केन्द्र स्थापनाका लागि अवलम्वन गर्नुपर्ने प्रावधानहरु**

- डिभिजन वन कार्यालयले पत्रिका, सार्वजनिक जनसम्पर्कका कार्यालयहरु र पकेट क्षेत्रका स्थानीय तहमा १५ दिने सूचना प्रकाशन गरी प्रस्ताव आह्वान गर्नुपर्नेछ ।
- इच्छुक व्यवसायी, उद्यमी, सहकारी, सामुदायिक तथा कवुलियती वन समूह, वा जडीबुटी तथा गैरकाष्ठ व्यवसायमा संलग्न किसानले प्रकाशित सूचना वमोजिम व्यावसायिक योजना सहित, प्लाण्ट स्थापना गर्ने क्षेत्रको चारकिल्ला सहित प्राविधिक तथा आर्थिक प्रस्ताव डिभिजन वन कार्यालयमा दिइएको म्याद भित्र पेश गर्नुपर्नेछ ।
- प्राप्त व्यवसायिक योजना सहितको प्रस्तावहरुको नियमानुसार मूल्याङ्कन गरी उपयुक्त प्रस्तावको छनौट गर्नुपर्नेछ । प्रस्तावहरुको मूल्याङ्कन गर्दा कच्चा पदार्थ उपलब्धताको सुनिश्चितता, जडीबुटीको पकेट क्षेत्रमा उत्पादित पैदावारको प्रशोधन, लाभप्रद व्यावसायिक योजना, प्रस्तावकले

कुल लगानी, वातावरणीय प्रभाव, जनसहभागिता, स्थानीय रोजगारीको शुनिश्चितता, मूल्य अभिवृद्धि क्षमता, प्रस्तावकको लगानीको प्रतिशत र शुनिश्चितता, कार्यक्रमको नवीनता तथा श्रृजनशिलता आदिको आधारमा मूल्याँकन गर्नुपर्दछ ।

- आवश्यकता अनुसार विज्ञहरु र प्राविधिक समिति गठन गरी डिभिजनल वन अधिकृतले प्रस्तावनाको मूल्याँकन गराउन सक्नेछ ।
- प्रस्तावकले कुल लगानीको न्यूनतम २० प्रतिशत वा सो भन्दा बढी लगांनी गर्नुपर्नेछ ।
- कार्य संचालन गर्न प्रथम किस्तामा ४० प्रतिशत, दोस्रो किस्तामा ३० प्रतिशत र अन्तिम प्रतिवेदन प्राप्त भएपश्चात बाँकि ३० प्रतिशत रकम अनुदान स्वरुप भुक्तानी गर्नुपर्नेछ ।
- कार्य सम्पन्न भएपछि प्रगतिमा निम्न कुराहरु समावेश गरिनुपर्नेछ,
  - ✓ उद्यम संचालन गर्ने समूह, व्यक्ति, सहकारीको नाम,
  - ✓ स्थापना गरिएको प्लाण्टको फोटो,
  - ✓ उत्पादित सामाग्रीको नमुना,
  - ✓ लागत रकम,
  - ✓ रोजगारी सिर्जना (श्रमदिन),
  - ✓ प्लाण्टको अवस्थिति, जग्गाको कि.नं., जि.पि.एस. लोकेशन ।

अनुदान प्राप्त व्यक्ति, संस्था, नीजि कम्पनी र सहकारी छनौट भई नगद अनुदान प्राप्त गरी लगेकोमा सम्झौता बमोजिम कार्य तोकिएको समय भित्र सम्पन्न नभएमा त्यस्तो रकम सरकारी बाँकी सरह असुलउपर गरिनेछ ।

**जनशक्ति व्यवस्थापन**

यस कार्यक्रमका लागि देशै भरका डिभीजन वन कार्यालय तथा सव डिभीजन वन कार्यालय का कर्मचारीहरु परिचालित हुनेछन् । वन तथा भू सरक्षण विभाग र प्रदेश मन्त्रालयबाट तथा वन निर्देशनालयबाट आवश्यकतानुसार प्राविधिक तथा अन्य सहयोग उपलब्ध गराइनेछ ।

**बजेट व्यवस्थापन** : यस कार्यक्रमका लागी जम्मा रु ५,६३,४०,००० बजेट विनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- करीव २८ लाख जडिबुटी विरुवा उत्पादन र १४ वटा जडिबुटी भण्डारण तथा प्रशोधन केन्द्र स्थापना भएको हुने ।

## ५. वन्यजन्तु संरक्षणका लागि क्षेत्रीय सहयोग प्रवर्धन आयोजना (व.उ.शि.नं. ३२९१२७)

बाघको वासस्थान व्यवस्थापन, नयाँ वासस्थानको पहिचान एवं विस्तार र सुधार गर्नका साथै संस्थागत रुपमा ज्ञान र क्षमता अभिबृद्धि गरी वन्यजन्तुको चोरी शिकार र अवैध व्यापार नियन्त्रण गर्ने उद्देश्यका साथ आर्थिक वर्ष २०६७/६८ देखि वन तथा भू-संरक्षण विभाग अन्तर्गतका जिल्ला वन कार्यालयहरु मार्फत सञ्चालन हुदै आएको यो कार्यक्रम हाल ४७ वटा जिल्लाहरुमा कार्यान्वय भइरहेको छ । दक्षिण एशियामा दुर्लभ वन्यजन्तु संरक्षण र बासस्थानमा सुधार गर्नु नै वन्यजन्तु संरक्षणका लागि क्षेत्रीय सहयोग प्रवर्धन आयोजनाको लक्ष्य हो । स्वस्थ पारिस्थितिकीय प्रणालीको विकास भई सन् २०२२ सम्ममा बाघको संख्या दोव्वर पार्ने उद्धेश्यलाई टेवा पुर्याउनु यस आयोजनाको अपेक्षित प्रतिफल हो । वन्यजन्तुको बासस्थान प्रवर्धन हुने कार्यक्रम, घाइते वन्यजन्तु संरक्षण तथा पुनः स्थापना, वन तथा वन्यजन्तु अपराध नियन्त्रण, मानव वन्यजन्तु द्वन्द व्यवस्थापन, नियमित अनुगमन तथा गस्ती जस्ता प्रमुख क्रियाकलापहरू यसमा समावेश गरिएका छन् । यी कार्यक्रमहरु चोरी शिकार तथा वन्यजन्तुको अवैध व्यापार नियन्त्रण गर्न अझ बढी उपयोगी हुनेछन् । यसबाट दुर्लभ वन्यजन्तु बाघको संरक्षणको साथसाथै समग्ररुपमा जैविक विविधताको संरक्षणमा समेत टेवा पुग्ने आशा राखीएको छ । यो कार्यक्रमलाई प्रभावकारी ढंगबाट कार्यान्वयनमा लानका लागि रु१११२७०००|- विनियोजन गरीएको छ ।

### ५.१. मानव वन्यजन्तु द्वन्द्व व्यवस्थापन तथा वन्यजन्तु उद्दार

यस शिर्षकमा विनीयोजित रकमबाट मानव वन्यजन्तु द्वन्द्व व्यवस्थापन सम्बन्धी गोष्ठिहरु सञ्चालन गर्नुपर्नेछ , जिल्लामा वन्यजन्तु व्यवस्थापन गर्नका लागि भैपरी आउने क्रियाकलापहरुका लागि जिल्लाको माग अनुसार प्रदान गर्न सकिनेछ । यस कार्यक्रंममा वन्यजन्तु उद्धारको लागि खोर निमार्ण तथा वन्यजन्तुको लागि आहाराको व्यवस्था गर्न सकिन्छ । कार्यक्रम सम्पन्न पश्चात् सञ्चालित गरिएका तालिमको विवरण, उद्दार गरिएका वन्यजन्तुहरुको नाम, संख्या, उद्दार गर्न परेको कारण आदि प्रगतीमा समावेश भएको हुनुपर्नेछ ।

**जनशक्ति व्यवस्थापन**

यस कार्यक्रमका लागि देशै भरका डिभीजन वन कार्यालय तथा सव डिभीजन वन कार्यालय का कर्मचारीहरु परिचालित हुनेछन् । वन तथा भू सरक्षण विभाग र प्रदेश मन्त्रालयबाट तथा वन निर्देशनालयबाट आवश्यकतानुसार प्राविधिक तथा अन्य सहयोग उपलब्ध गराइनेछ ।

**बजेट व्यवस्थापन :** यस कार्यक्रमका लागी जम्मा रु ६१,२७,००० बजेट विनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- वन्यजन्तुहरुको सरक्षणका लागि प्रभावित जिल्लाहरुमा मानव वन्यजन्तु द्वन्द्व व्यवस्थापन तथा वन्यजन्तु उद्दार भएको हुने ।

५.२. सरोकारवालाहरुको बैठक

वन र वन्यजन्तु अपराध नियन्त्रण सम्बन्धी सरोकारवालाहरु जस्तै जिल्ला प्रशासन कार्यालय, सरकारी वकिल कार्यालय, जिल्ला प्रहरी कार्यालय र अन्य सम्बन्धीत संस्थाका प्रतिनिधहरुसँग छलफल र अन्तरक्रिया गर्नुपर्नेछ र सो गर्दा हुने खाजा तथा भत्ता खर्चमा बजेट खर्च गर्न सकिन्छ ।

**जनशक्ति व्यवस्थापन**

यस कार्यक्रमका लागि देशै भरका डिभीजन वन कार्यालय तथा सव डिभीजन वन कार्यालय का कर्मचारीहरु परिचालित हुनेछन् । वन तथा भू सरक्षण विभाग र प्रदेश मन्त्रालयबाट तथा वन निर्देशनालयबाट आवश्यकतानुसार प्राविधिक तथा अन्य सहयोग उपलब्ध गराइनेछ ।

**बजेट व्यवस्थापन :** यस कार्यक्रमका लागी जम्मा रु १४,१०,००० बजेट विनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- वन्यजन्तुहरुको सरक्षणका लागि सरोकारवालाहरुको करिव ४७ वटा बैठक भएको हुने ।

**५.३. वन्यजन्तु संरक्षण सम्बन्धि प्रचारप्रसार**

यसमा विभिन्न रेडियो, पत्रपत्रीकामा सूचना प्रवाह लगायतका जनचेतनामूलक कार्यक्रम सञ्चालन गर्न सकिन्छ । होर्डिङ बोर्ड, पर्चा आदि पनि तयार गर्न सकिन्छ । कार्यक्रम सम्पन्न भइसकेपछि प्रगतिमा सम्पन्न गरिएका क्रियाकलाप जस्तै सूचना प्रवाह, जनचेतना मूलक कार्यक्रम, होर्डिङ बोर्ड, पर्चा आदि को विवरण संलग्न गर्नु पर्दछ ।

**जनशक्ति व्यवस्थापन**

यस कार्यक्रमका लागि देशै भरका डिभीजन वन कार्यालय तथा सव डिभीजन वन कार्यालय का कर्मचारीहरु परिचालित हुनेछन् । वन तथा भू सरक्षण विभाग र प्रदेश मन्त्रालयबाट तथा वन निर्देशनालयबाट आवश्यकतानुसार प्राविधिक तथा अन्य सहयोग उपलब्ध गराइनेछ ।

**बजेट व्यवस्थापन :** यस कार्यक्रमका लागी जम्मा रु २०,४०,००० बजेट विनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- वन्यजन्तुहरुको सरक्षणका लागि विभिन्न माध्यमबाट वन्यजन्तु संरक्षण सम्बन्धि प्रचारप्रसार भएको हुने ।

**५.४. वन्यजन्तु संरक्षणका लागि राप्पिड रेस्पोन्स टिम परिचालन**

डिभिजन वन कार्यालय वा जिल्लास्तरमा चोरी शिकार नियन्त्रणका लागि Rapid Response Team गठन गर्नुपर्नेछ र उक्त टोलीलाई फिल्डस्तरमा कार्य गर्नका लागि लाग्ने फिल्ड गियर, खाजा भत्ता, इन्धन आदिमा यस शिर्षकमा विनियोजित बजेटबाट खर्च गर्नुपर्नेछ ।

**जनशक्ति व्यवस्थापन**

यस कार्यक्रमका लागि देशै भरका डिभीजन वन कार्यालय तथा सव डिभीजन वन कार्यालय का कर्मचारीहरु परिचालित हुनेछन् । वन तथा भू सरक्षण विभाग र प्रदेश मन्त्रालयबाट तथा वन निर्देशनालयबाट आवश्यकतानुसार प्राविधिक तथा अन्य सहयोग उपलब्ध गराइनेछ ।

**बजेट व्यवस्थापन** : यस कार्यक्रमका लागी जम्मा रु १५,५०,००० बजेट विनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- वन्यजन्तु संरक्षणका लागि सवेदनशिल जिल्लाहरुमा राप्पिड रेस्पोन्स टिम (Rapid Response Team) परिचालन भइ वन्यजन्तु संरक्षणमा उल्लेखनीय टेवा पुगेको हुने ।

## इ) स्थानीय तहबाट संचालन हुने कार्यक्रमहरु

स्थानीय तहसँगको सहकार्यमा सम्पादन गरिने कार्यक्रमहरुको कार्यान्वयन संवन्धित वन समूहले डिभिजन वन कार्यालयको सहयोगमा गर्ने छन् । यसरी तय भएको कार्यक्रम सफलताका साथ कार्यान्वयन गर्न आवश्यक सहजीकरण गर्ने, रकम सहयोग गर्ने, कार्यवातावरण तयार गर्ने र अनुगमन गर्ने भूमिका स्थानीय तहले गर्ने छन् । स्थानीय तहले रकम प्रदान गर्ने भएमा सो रकम संवन्धित समूहको खातामा जम्मा गर्नु पर्नेछ । यसरी स्थानीय तह समेतको सहकार्यमा सञ्चालित कार्यक्रमबाट प्राप्त हुने लाभको वाँडफाड प्रचलित कानुन बमोजिम हुनेछ ।

### १. सामुदायिक तथा कबुलियती वन विकास कार्यक्रम

### १.१. सामुदायिक वनमा पर्यापर्यटन/ उद्ध्यम प्रवर्धन

पर्यापर्यटन विकास तथा वनपैदावारमा आधारित कुनै उद्ध्यम विकासको सम्भावना भएको सामुदायिक वनहरुमा सामुदियक वनको सहभागीता र सहकार्यमा पर्यापर्यटन विकास तथा उद्ध्यम विकासका लागि आवश्यक पुर्वाधारहरु वनाउने काममा यस शीर्षकको रकम खर्च गर्न सकिनेछ । यसका लागि कम्तिमा निम्न शर्तहरु पुरा गर्नुपर्नेछ ।

- सामुदायिक वनमा पर्यापर्यटन प्रवर्धन कार्यविधि,२०७५ अनुसार समुदायिक वन समूहबाट पर्यापर्यटन तथा उद्ध्यम विकासका लागि प्रस्ताव तथा लगत इष्टिमेट ।
- उद्ध्यमको हकमा अवश्यक कच्चापदार्थको व्यवस्थापनको योजना ।
- कार्य सम्पन्न पश्चात प्रगती प्रतिवेदनमा कार्यक्रम संचालन गरेको स्थानको फोटो, पब्लिक अडिटिंग आदि समावेश गर्नु पर्ने छ ।

#### जनशक्ति व्यवस्थापन

स्थानिय तहहरुले आफ्नो क्षेत्रका सामुदायिक वन उपभोक्ता समूहहरुसँग समन्वय गरी आफू मातहतका डिभिजन/ सब डिभिजन वन कार्यालयका वन प्राविधिकहरुको समेतको सहयोगमा यो कार्यक्रम कार्यान्वयन गर्न सकिनेछ ।

**बजेट व्यवस्थापन :** ५८८ वटा स्थानिय तहहरुमा रु.१०००००।- देखि रु.५०००००।- गरी यो कार्यक्रमका लागी जम्मा रु.९,१५,८९,०००।- बजेट विनियोजन गरिएको छ ।

#### अपेक्षित उपलब्धि

- ५८८ वटा स्थानिय तहहरुका क्षेत्रमा पर्ने कम्तीमा एकवटा सामुदायिक वनमा पर्यापर्यटन वन वनमा आधारीत उद्यमका लागि आवश्यक पुर्वाधार वन्नेछ ।
- स्थानिय तहहरु, सामुदायिक वन उपभोक्ता समूहहरु र वन कार्यालयहरुसँग समन्वय स्थापना हुने ।

- पर्यापर्यटन वा उद्यम विकासबाट समूह तथा स्थानिय जनताको आय आर्जनमा टेवा पुग्नेछ ।

**२. बृक्ष सुधार वृक्षारोपण तथा निजी वन कार्यक्रम**

**२.१. विरुवा उत्पादन सहयोग/ विरुवा खरिद अनुदान (वस्तुगत र नगद)**

स्थानिय तहले विरुवा उत्पादन/खरीद योजना बनाइ यो कार्यक्रम आफै संचालन गर्न सक्नेछ । स्थानिय तहले अन्य कुनै व्यक्ति वा समूह मार्फत कार्य संचालन गर्न चाहेमा ति व्यक्ति वा समूहबाट विरुवा उत्पादन/खरीदको प्रस्ताव माग गर्नुपर्नेछ । प्रस्ताव बमोजिम कार्य गर्नका लागि आवश्यक सामाग्रीहरु (वीउविजन, मलखाद, नर्सरी व्यवस्थापनका अन्य सामाग्रीहरु) खरीद गर्नमा डिभिजन वन कार्यालय तथा स्थानिय तह र समुदायमा आधरित वन समूहका प्रतिनिधिहरु समावेश भएको समूह वा फोकल टिमको निर्णय बमोजिमको यो अनुदान दिन सकिनेछ ।

**जनशक्ति व्यवस्थापन**

विरुवा उत्पादन सहयोग/ विरुवा खरिद अनुदान (वस्तुगत र नगद) कार्यक्रमको लागि स्थानिय तहमा मौजुदा प्राविधिक जनशक्ति एवं डिभिजन वन कार्यालय समेतको सहयोगमा गर्न सकिनेछ ।

**बजेट व्यवस्थापन :** यस कार्यक्रमका लागी जम्मा रु २,४२,५०,००० बजेट विनियोजन गरिएको छ ।

**अपेक्षित उपलब्धि**

- स्थानिय तहमा गुणस्तरिय विरूवा उत्पादन भई सर्व सुलभरूपमा उपलब्ध हुनेछ साथै बृक्षरोपण कार्यमा सहयोग पुग्नेछ।

अनुसूचि १

## वन पैदावारमा आधारित वन उद्यम स्थापना तथा संचालन कार्यविधि, २०७५

**प्रस्तावनाः**

नेपालको प्रमूख प्राकृतिक स्रोत मध्ये वनजंगल महत्वपूर्ण नविकरणीय स्रोत हो । समृद्ध नेपाल र सुखी नेपाली को नारालाई साकार पार्न वनक्षेत्रको योगदानलाई बृद्धि गर्दै उत्पादनमूखी बनाउनको लागि वन पैदावारमा आधारित उद्यमहरु स्थापना गर्ने र आवश्यक पर्ने कच्चा पदार्थको आपूर्ति गर्न मौजुदा स्रोतको अधिकतम उपयोग गरी देशको आवश्यकता पूरा गर्ने र काठ र तयारी फर्निचर जस्ता मूख्य वनउपज, गैह्रकाष्ठ तथा सो बाट उत्पादित बस्तुहरु समेत बैदेशिक मुद्रा खर्चगरी आयात गर्नुपर्ने स्थितिलाई क्रमशः न्यूनीकरण गर्दै जानु आजको आवश्यकता हो । यसका लागी वन क्षेत्रको विकास र वन उद्यम प्रवद्र्धनका लागि निजी, सार्वजनिक र समुदायका बीच सहकार्य र निजी क्षेत्र र समुदायका बीच साझेदारीलाई प्रोत्साहन गर्ने नीति कार्यान्वयन गर्ने शिलसिलामा सामुदायिक वनमा उद्यमशिलता अभिवृद्धि, वन पैदावारमा आधारित उद्योग संचालन, काठ ट्रिटमेन्ट प्लान्ट स्थापना, काष्ठ उद्योग स्थापना तथा संचालन र वासंमा आधारित उद्योग समेतका कार्यक्रम सन्चालनका लागी चालु आ.व.मा बजेट विनियोजन भैसकेको छ । विनियोजित बजेटले निर्धारण गरे बमोजिमका कार्यक्रमहरुको कार्यान्वयनमा साझा बुझाई कायम गरी सरल र प्रभावकारी रुपमा कार्यक्रम संचालन गरी मूल लक्ष्य प्राप्त गर्नका लागि यो कार्यविधि २०७५ जारी गरिएको छ ।

### परिच्छेद - १

**१ संक्षिप्त नाम र प्रारम्भ**

क) यो कायविधिको नामः "वन पैदावारमा आाधारित उद्यम स्थापना तथा संचालन कार्यविधि, २०७५" रहेको छ ।

ख) यो कार्यविधि वन तथा वातावरण मन्त्रालयबाट स्वीकृत भएको मिति देखि लागु हुनेछ ।

**२. परिभाषा:** विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस कार्यविधिमाः

क) "उद्यम" भन्नाले वन पैदावारमा आधारित उद्योग भन्ने सम्झनु पर्नेछ । यस शब्दले ठूला, मझौला सःमिल, सबै खालका काठजन्य उद्योगहरु, काठ ट्रिटमेन्ट प्लान्ट, वेत-बाँसमा आधारित उद्योग समेतलाई जनाउँछ ।

ख) "समिति" भन्नाले दफा ४ बमोजिमको समितिलाई सम्झनु पर्नेछ ।

परिच्छेद - २

३. उद्देश्यहरुः

सवै प्रकारका वन पैदावारहरुको गुणस्तरमा सुधार ल्याउनुका साथै मूल्य श्रृंखलाहरुमा बृद्धि गरि स्थानिय रुपमा रोजगारीको सृजना गर्दै प्रादेशिक तथा राष्ट्रिय अर्थतन्त्रमा टेवा पुऱ्याउने यस कार्यक्रमको प्रमुख उद्धेश्य रहेको छ । अन्य उद्देश्यहरु देहाय वमोजिम रहेका छन्ः

क) उपलब्ध काष्ठ जन्य गैरकाष्ठ वन पैदावारहरु तथा सेवाको उत्पादन, प्रवद्र्धन तथा मूल्य अभिवृद्धि गर्ने,

ख) उद्यम स्थापना, सञ्चालन र वजारीकरण गरी सन्तुलित आर्थिक विकास एवं रोजगारी सृजना गर्दै गरिवी निवारणमा टेवा पुऱ्याउने ।

ग) निर्यात जन्य उद्यमको प्रबद्र्धन गर्ने ।

परिच्छेद - ३

**४. समितिको गठन, संचालन तथा ब्यवस्थापन:**

क) उद्यम स्थापना तथा संचालन र व्यवस्थापनको लागि देहाय बमोजिमको समिति रहने छ ।

१) प्रादेशिक वन निर्देशक ....................................................................................संयोजक

२) प्रतिनिधि, प्रादेशिक घरेलु, उद्योग विकास, वाणिज्य सम्वन्धि निर्देशनालय........सदस्य

३) प्रतिनिधि, प्रादेशिक योजना तथा बाणिज्य सम्वन्धि निर्देशनालय ....................सदस्य

४) प्रतिनिधि, सम्वन्धित जिल्लाको उद्योग वाणिज्य संघ .................................. सदस्य

५) कार्यक्रम संचालन हुने डिभिजनको डिभिजन वन अधिकृत...........................सदस्य सचिव

ख) समितिमा आवश्यकता अनुसार विषय विज्ञलाई बैठकमा आमन्त्रण गर्न सकिनेछ ।

ग) समितिको बैठक संयोजकले तोकेको मिति, समय र स्थानमा बस्नेछ र बैठक सम्बन्धी अन्य कार्यविधि समिति आफैंले निर्धारण गरे बमोजिम हुनेछ ।

**५. समितिको काम कर्तव्य अधिकार:**

क) व्यवसायीहरु तथा समुदायको संलग्नतामा वन उद्यम स्थापना तथा सञ्चालनको लागी पहल गर्ने

ख) उपयुक्त स्थान तथास्थापना तथा सञ्चालन गर्ने उद्योगको सम्भाव्यता अध्ययन गर्ने ।

ग) उद्योगलाई आवश्यक पर्ने कच्चा पदार्थको व्यवस्था गर्न सहजिकरण गर्ने ।

घ) उद्यम/उद्यमीलाई आवश्यक पर्ने ऋणको लागि वितिय संस्थामा र अनुदानको लागी सम्वन्धित निकायमा सिफारिस गर्ने ।

ङ) उद्यमहरुको नियमति रुपमा निरीक्षण अनुगमन गर्ने ।
च) उत्पादित बस्तुहरुको बजारीकरण गर्न समन्वय तथा सहजिकरण गर्ने ।
छ) उद्यम स्थापना, संचालन तथा प्रवर्धनको विषयमा आवश्यक परेमा थप कार्यविधी तयार गरी कार्यान्वयन गर्ने ।

## परिच्छेद - ४

### ६. उद्यम स्थापना र सञ्चालनः

#### क) प्रस्ताव आव्हान

समितिले उद्यम स्थापनाको लागि केन्द्रबाट प्रकाशित हुने राष्ट्रिय दैनिक पत्रिकामा ३० दिने सार्वजनिक सूचना प्रकाशन गरी योग्यता पुगेका इच्छुक व्यक्ति/उद्यमीबाट निम्न बमोजिमको विवरण सहितको प्रस्ताव आवहान गर्ने छ । स्थापना तथा सञ्चालन गरिने उद्यमहरुको हकमा प्रस्तावकको नाम र ठेगाना, दर्ता प्रमाणपत्र, मुल्य अभिवृद्धि कर (VAT) दर्ता, आयकर दर्ता प्रमाणपत्रसहित देहाय वमोजिमका कागजात तथा विवरण सहितको व्यवसायिक योजना समितिमा पेश गर्नु पर्ने छ । उक्त योजनामा निम्न कुराहरु समावेश गर्नु पर्ने छ ।

- प्रस्ताव पेश गर्नेव्यक्ति/उद्यमीको नाम र ठेगाना,
- उद्यम स्थापना तथा संचालन गर्ने आर्थिक, प्राविधिक प्रस्ताव,
- उद्यम स्थापना तथा संचालन गर्न आवश्यक भौतिक संरचना, मेशीनरी औजार, कच्चा पदार्थको उपलव्धता सम्वन्धि विवरणहरु,
- उद्यमको उत्पादन र भण्डारण क्षमता,
- नेपाल सरकारवाट स्वीकृती प्राप्त प्राविधिकले गरेको लागत ईष्टीमेट तथा डिजाईन
- उद्यम स्थापना तथा संचालन विधि
- उद्यम स्थापना एवं संचालन वाट लाभान्वित समुदाय र यसवाट सिर्जना हुने रोजगारी
- उद्यम स्थापना तथा संचालन हुंदा नेपाल सरकारलाई प्राप्त हुने राजश्व÷लाभ,
- लगानीका सम्भाव्य स्रोत सम्बन्धी विवरण,
- बीमा सम्बन्धी व्यवस्था,
- प्रस्तावितउद्यममा उपयोग हुने कच्चा पदार्थको परिमाण तथाप्राप्त हुने संभावित डिभिजनहरु
- उद्यम स्थापना तथा संचालन सम्बन्धमा प्रस्तावकले अवलम्बन गर्ने आर्थिक कार्यविधि सम्बन्धी व्यवस्था
- प्रथम चौमासिक भित्र प्रस्ताव आह्वान गरी सक्नु पर्नेछ ।

### ७) प्रस्ताव मुल्याङ्कन:

समिति आफै वा आवश्यकता अनुसारको उप-समिति वनाई प्राप्त व्यवसायिक योजनाहरुको मुल्यांकन गरी उपयुक्त प्रस्तावको छनौट गर्नुपर्दछ । प्रस्ताव छनौट गर्दा निम्न वुदांहरुलाई आधार लिन सकिनेछ ।

- कच्चा पदार्थ उपलब्ध हुने स्थान, परिमाण, र दिगोपना
- उत्पादित वस्तु वा सेवाको निर्यात बजार सम्भावना
- आवश्यक पर्ने जग्गा उद्यम/कम्पनीको स्वामित्वमा भएको नभएको
- काठजन्य उद्यमको हकमा गुणस्तरमा बृद्धि तथा काठको धुलो वा अन्य खेरजाने भागको प्रयोगगर्नेर ट्रिटमेन्ट प्लान्ट स्थापना गर्दा साल, अस्ना बाहेकका काठको प्रयोग गर्नेलाइ प्राथमिकता
- नयाँ तथा नवीनतम प्रविधिको (New and Innovative) उद्यम स्थापना हुने भएमा प्रथमिकता दिने
- ५० प्रतिशत वा सो भन्दा बढि स्थानीय रोजगार हुनेलाई प्राथमिकता
- लगानी स्रोत र परिमाण (प्रतिशतमा)

### ८) उद्यम स्थापना र सञ्चालनः

उद्यम स्थापना तथा सञ्चालनको लागी स्वीकृत लागत ईष्टीमेट तथा डिजाईनबमोजिमको रकम मध्ये सम्वन्धित उद्यमी/संघसंस्थाले न्यूनतम ५० प्रतिशत र नेपाल सरकारबाट अधिकतम ५० प्रतिशत रकम अनुदान स्वरुप प्राप्त हुने छ । जग्गा खरिद/ब्यवस्थापन,सञ्चालन खर्चका लागी उद्यमी स्वयंले लगानी गर्नु पर्ने र अनुदानमा प्राप्त भएको रकमबाट मेसीनरी औजार लगायतका बस्तु सेवा खरिद गर्नेर प्राप्त हुने अनुदानको बढिमा ५० प्रतिशत रकम भवन निमार्णमा खर्चगर्न सकिने छ । अनुदानमा प्राप्त हुने रकम कार्य प्रगतिको आधारमा समितिबाट सिफारिस भएको आधारमा पहिलो किस्तामा ४० प्रतिशत र दोस्रो किस्तामा ३० प्रतिशत र तेस्रोमा ३० प्रतिशत अनुदान उपलव्ध गराईने छ ।

### ९) अनुगमन मुल्याँकन:

क) उदंयमीले अर्ध-वार्षिक कार्य प्रगति विवरण सम्वन्धित डिभिजन वन कार्यालय मार्फत प्रदेश वन निर्देशनालय, प्रदेश मन्त्रालयमा र वार्षिक रुपमा वन तथा वातावरण मन्त्रालयमा पठाउनु पर्नेछ ।

ख) समिति स्वयं वा तोकिएको सदस्यले कम्तिमा वार्षिक २ पटक उद्यम स्थापना एंव सञ्चालनको प्रभावकारिता मुल्याँकन गर्ने छ ।

ग) सञ्चालित उद्यमको अवस्था एवं प्रभावकारीता बृद्धिको लागी प्रदेश वन निर्देशनालय तथा डिभिजन वन कार्यालयबाट समय समयमा अनुगमन हुनेछ ।

घ) संघीय तथा प्रदेश मन्त्रालय, अनुगमन समिति तथा माथिल्लो निकायबाट प्राप्त निर्देशनको पालना गर्नु गराउनु पर्ने छ ।

१०) विविधः

क) समितिले समितिको सचिवालय खर्चका लागि वन उद्यम अनुदान रकमको वढिमा २ प्रतिशत रकम छुटाइ खर्च गर्न सक्ने छ ।

ख) यस कार्यविधि वमोजिम गठित समिति तथा उप-समितिका पदाधिकारीहरु र उक्त समितिमा आमन्त्रण गरिने विषय विज्ञ सदस्यहरुले समेत बैठकमा उपस्थित भए वापत बैठक भत्ता नेपाल सरकारको प्रचलित नियमानुसार पाउने छन्।

ग) काबु बाहिरको परिस्थिती बाहेकको अवस्थमा २ वर्ष भित्र उद्यम सञ्चालन नगरेमा र नियमित रुपमा कम्तीमा ५ वर्ष सम्म उद्योग संचालन नगरेमा अनुदानमा प्राप्त रकम सरकारी बाँकी सरह असुल उपर गरिने छ ।

घ) कार्यक्रम कार्यान्वयनमा कुनै दृविधा भएमा प्रदेशउद्योग पर्यटन वन तथा वातावरण मन्त्रालयले बाधा अड्काउ फुकाउनसक्ने छ ।

ङ) प्रदेश उद्योग पर्यटन वन तथा वातावरण मन्त्रालयबाट बहुवर्षिय कार्यक्रम स्वीकृत नभएको अवस्थामा एक पटक अनुदान पाएको उद्योगले यो कार्यबिधी अनुसार पुनः अनुदान प्राप्त गर्ने छैन ।

अनुसूचि २

# सामुदायिक वनमा पर्यापर्यटन प्रवर्धन कार्यविधि, २०७५

**१. प्रस्तावना**

पर्यटकीय सम्भावना रहेका सामुदायिक वनहरुमा वन पैदावारको उत्पादन सहित वातावरणीय सेवाहरुको प्रवर्धन गरी अधिकतम आर्थिक लाभ प्राप्त गर्ने, समग्र वनको हैसियतमा सुधार गर्ने, वातावरण र जैविक विविधता संरक्षण र स्थानीय उपभोक्ताहरुको मौलिक सामाजिकरसांस्कृतिक मूल्य मान्यतामा बढावा हुनेगरी वन विहार, जलविहार, पार्क/उद्यान अवलोकन, वनभोज, फोटो यात्रा, सिनेमा वा भिडियो छायाँकन, सूचना तथा शन्देसमूलक गतिविधि, ऐतिहासिक/धार्मिक/साँस्कृतिक सम्पदा अवलोकन जस्ता संरक्षण, रोजगारी तथा आयआर्जन सिर्जना हुने कृयाकलापहरु सञ्चालन गरी समृद्धिमा टेवा पुऱ्याउने कार्य गर्न इच्छुक समूहलाई सहयोग पुऱ्याउन सामुदायिक वनमा पर्यापर्यटन संचालन कार्यविधि २०७५ जारी गरिएको छ ।

**२. संक्षिप्त नाम र प्रारम्भ**

यो कार्यविधिको नाम "सामुदायिक वनमा पर्यापर्यटन संचालन कार्यविधि २०७५" रहेको छ । यो कार्यविधि नेपाल सरकार, वन तथा वातावरण मन्त्रालयवाट स्वीकृत प्राप्त भएको मितिदेखि लागु हुनेछ । आर्थिक वर्ष २०७५/७६ को स्वीकृत वार्षिक कार्यक्रममा उल्लेखित सामुदायिक वनमा पर्यापयर्टन कार्यक्रम समेत यसै कार्यविधि अनुसार कार्यान्वयनमा ल्याइनेछ ।

**३. परिभाषा**

विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा, यस कार्यविधिमा

(क) "ऐन" तथा "नियमावली" भन्नाले वन ऐन, २०४९ र वन नियमावली, २०५१ सम्झनु पर्दछ ।

(ख) "मार्गदर्शन" भन्नाले सामुदायिक वन विकास कार्यक्रमको मार्गदर्शन, २०७१ सम्झनु पर्दछ ।

(ग) "विधान" तथा "कार्ययोजना" भन्नाले सामुदायिक वन उपभोक्ता समूहको विधान र सामुदायिक वनको स्वीकृत कार्ययोजना सम्झनु पर्दछ ।

(घ) "समूह" भन्नाले सामुदायिक वन उपभोक्ता समूहलाई सम्झनु पर्दछ ।

(ङ) "पर्यापर्यटन" भन्नाले सामुदायिक वन संरक्षण र स्थानीय समुदायको समृद्धिमा टेवा पुग्ने गरी शैक्षिक, मनोरन्जनात्मक, भूदृष्य अवलोकन तथा जानकारीमूलक उद्देश्यको लागि निम्नलिखित नीतिगत सिद्धान्तमा आधारित रहेर प्रकृतिप्रतिको जिम्मेवारीवोधका साथ सामुदायिक वन विहार गर्ने कार्यलाई जनाउँछ ।

- सामुदायिक वनको दिगो व्यवस्थापन र जैविक विविधता संरक्षण गर्दै आर्थिक लाभ उपलब्ध गराउने,

- समूह तथा निजी क्षेत्रको लागि आय आर्जन र रोजगारीका अवशरहरुको सिर्जना गराउने,
- स्थानीय सामाजिक, सांस्कृतिक तथा वातावरणीय मूल्य मान्यतालाई सम्मान तथा सुदृढ गर्ने,
- पर्यटक तथा स्थानीय समुदाय दुवै पक्षलाई सकारात्मक अनुभव दिने ।

(च) "पर्यापर्यटन क्षेत्र" भन्नाले प्राविधिक र व्यवस्थापकीय दृष्टिकोणले पर्यापर्यटनका लागि उपयुक्त ठहर गरी स्वीकृत कार्ययोजनामा तोकिएको सामुदायिक वनको भाग सम्झनु पर्दछ ।

(छ) "पर्यापर्यटन योजना" भन्नाले सामुदायिक वनको स्वीकृत कार्ययोजनमा छुट्टै परिच्छेदको रुपमा समावेश गरिएको पर्यापर्यटन कृयाकलापहरुको पहिचान, व्यवस्थापन तथा प्रवर्धनका कार्यक्रमहरु सहितको योजना सम्झनु पर्दछ ।

(ज) "प्रस्ताव" भन्नाले पर्यापर्यटन व्यवसाय सञ्चालन गर्न तयार गरेको आर्थिक तथा प्राविधिक विश्लेषण सहितको प्रस्तावलाई सम्झनु पर्दछ ।

(झ) "प्रस्तावक" भन्नाले पर्यापर्यटन व्यवसाय सञ्चालन गर्ने उद्देश्यले यसै कार्यविधि अनुसार प्रस्ताव पेश गर्ने समूह, व्यक्ति, फर्म वा संस्था सम्झनु पर्दछ ।

(ञ) "शुल्क" भन्नाले पर्यापर्यटन व्यवसाय सञ्चालनका लागि सामुदायिक वनक्षेत्र वा त्यसले प्रदान गर्ने सेवाको उपयोग गरे वापत समूह वा समूहसंग करार गरेको संचालकलाई सेवाग्राहीले बुझाउने रकमलाई सम्झनु पर्दछ ।

(ट) "संचालक" भन्नाले स्वीकृत कार्ययोजना अनुसार सामुदायिक वनमा पर्यापर्यटन व्यवसाय संचालन गर्ने समूह वा समूहसंग करार गरी लगानी गर्ने र सोबाट प्राप्त लाभको हिस्सेदारलाई सम्झनु पर्दछ ।

(ठ) "निजी क्षेत्र" भन्नाले पर्यापर्यटन व्यवसायमा समूहसंग साझेदारी वा निजी लगानी गर्न इच्छुक व्यक्ति, कम्पनी वा संघसंस्थालाई सम्झनु पर्दछ ।

(ढ) "स्थानीय तह" भन्नाले गाँउपालिका वा नगरपालिका वा उपमहानगरपालिका वा महानगरपालिका सम्झनु पर्दछ ।

(ढ) "अवधि" भन्नाले स्वीकृत कार्ययोजनामा तोकिए बमोजिम पर्यापर्यटन व्यवसाय सञ्चालन गर्न पाउने समय सिमालाई सम्झनु पर्दछ ।

(ण) व्यवस्थापन समिति भन्नाले दफा ७ बमोजिमको समितिलाई सम्झनु पर्दछ ।

**४. लक्ष्य र उद्देश्य**

४.१ लक्ष्य

सामुदायिक वनमा पर्यापर्यटन संचालन गरी जैविक विविधता संरक्षण, दिगो वन व्यवस्थापन र स्थानीय तथा राष्ट्रिय समृद्धिमा योगदान पु्र्याउने ।

४.२ उद्देश्य

(क) सामुदायिक वनमा पर्यापर्यटन व्यवसाय संचालन गरी जैविक विविधता संरक्षण लगायतका वातावरणीय सेवाको प्रवर्धन तथा सदुपयोग गर्ने ।

(ख) पर्यापर्यटन व्यवसायलाई समूहको वैकल्पिक आयस्रोतको रुपमा स्थापित गरी आम्दानी र रोजगारीका अवसर सहितको वातावरणमैत्री विकासमा योगदान पुऱ्याउने ।

(ग) समूह र सहकारी, स्थानीय तह वा निजी क्षेत्र ९जहां जुन सम्भव छ) को व्यवसायिक साझेदारीमा पर्यापर्यटन व्यवसाय संचालन गरी स्थानीयस्तरमा संरक्षण तथा समृद्धि हांसिल गर्ने ।

**५. सामुदायिक वनमा पर्यापर्यटन सम्बन्धी व्यवस्था**

- समूहले पर्यापर्यटन क्रियाकलाप आँफै वा निजी क्षेत्र, सहकारी, स्थानीय तहको साझेदारी र सहकार्यमा गर्नसक्ने छ ।
- पर्यापर्यटन व्यवसाय संचालन गर्न चाहने समूहले अनुसूची १ बमोजिमका पर्यापर्यटन सम्बन्धी विषयहरुमध्ये आंफुले गर्न चाहेको विषय साधारण सभावाट निर्णय गराई कार्ययोजनामा समावेश गर्न सम्वन्धित डिभिजन वन कार्यालयवाट स्वीकृत प्राप्त गर्नुपर्नेछ ।
- समूह आफैंले पर्यापर्यटन ब्यवसाय सञ्चालन गर्ने भएमा कार्ययोजनामा भएको व्यवस्था बमोज़िम प्रस्ताव तयार गरी साधारण सभाबाट अनुमोदन गराई डिभिजनल वन अधिकृतको स्वीकृति लिनुपर्नेछ ।
- समूहले निजी क्षेत्रको साझेदारी वा सहकार्यमा पर्यापर्यटन व्यवसाय सञ्चालन गर्ने भएमा दफा ८ बमोजिम आशयपत्र र प्रस्ताव आव्हान, मूल्याङ्कन, संचालक छनौट तथा करार गरी कार्ययोजनामा समावेश गर्न डिभिजनल वन अधिकृतको स्वीकृति लिनुपर्नेछ ।
- सामुदायिक वनको दिगो व्यवस्थापन र जैविक विविधता संरक्षणमा सहयोग पुग्ने गरी अनुसूची २ मा उल्लेखित क्रियाकलापहरु सञ्चालन गर्न सकिनेछ । वन्यजन्तु पालन सहितको पर्यापर्यटनको लागि दफा ६ वमोजिमको व्यवस्था पालना गर्नुपर्नेछ ।
- सामुदायिक वनमा पर्यापर्यटन सम्बन्धी व्यवसाय सञ्चालन गर्दा अनुसूची ३ मा उल्लेखित क्रियाकलापहरु गर्न गराउन हुँदैन ।

**६. वन्यजन्तु पालन सहितको पर्यापर्यटनको लागि विशेष व्यवस्था**

- समूहले सामुदायिक वनको भौगोलिक अवस्था र हावापानी सुहाउंदो किसिमका असहाय, घाइते(उपचार पश्चात), मुद्दाको रोहमा प्राप्त भएका, तथा उद्दार गरिएका वन्यजन्तु संग्रह, पालन र ब्यवस्थापन गरी वन्यजन्तु को महत्व, स्वभाव, संरक्षणको स्थिति आदि बारे जानकारी तथा संरक्षण शिक्षा सञ्चालन गर्न सक्नेछ ।
- पर्यापर्यटनको लागि उपदफा (१) वमोजिम प्राप्त भएका वन्यजन्तु पालन गर्दा देहायका न्यूनतम व्यवस्थाको प्रवन्ध गरेको हुनुपर्नेछ ।

- वन्यजन्तुको आनीवानी लगायतको विषयलाई ध्यान दिई सदर चिडियाखानाले निर्धारण गरेको मापदण्ड अनुसारको आहार, वास क्षेत्र, वन्यजन्तुको मृत्यु संस्कार, सरसफाई तथा कार्यस्थलमा सुरक्षाको व्यवस्था
- वन्यजन्तुको स्वास्थ परीक्षण तथा उपचारको लागि पशु चिकित्सकको नियमित सेवाको व्यवस्था
- वन्यजन्तुको लागि पानीको स्थायी स्रोतको व्यवस्था
- वन्यजन्तुको हेरचाह गर्ने care taker लाई तालिमको व्यवस्था

- एक डिभिजन वन कार्यालय अन्तरगत बढिमा तीनवटासम्म गैडा, वाघ, हात्ति, कस्तुरी मृग, ध्वासे चितुवा, हिउं चितुवा, रेडपाण्डा, गौरी गाई, घडियाल गोही, ठूलो धनेश वाहेकका प्रजातिका लागि सम्वन्धित डिभिजन वन अधिकृतवाट र त्यसभन्दा वढि संख्याका प्रजाति पालन गर्नु परेमा विभागवाट स्वीकृत लिनुपर्नेछ ।
- परिस्थितिजन्य कारण वा दफा १३ वमोजिमको अनुगमन प्रतिवेदनवाट वन्यजन्तु पालन कार्यक्रम वन्द गर्नुपर्ने भएमा डिभिजन वन अधिकृतले प्रदेश वन निर्देशनालय, छिमेकी डिभिजन वन कार्यालय, विभाग र नजिकको राष्ट्रिय निकुन्ज कार्यालयसंग आवश्यक समन्वय गरी अन्य इच्छुक समूहलाई हस्तान्तरण गर्ने वा निकुन्ज/राष्ट्रिय वनमा छाड्ने आवश्यक निर्णय लिनुपर्नेछ ।

**७. व्यवस्थापन समिति सम्बन्धी व्यवस्था**

- पर्यापर्यटन व्यवसाय सञ्चालन गर्न चाहने समूहले देहाय बमोजिमको एक व्यवस्थापन समिति गठन गर्नेछ
    - समूहको अध्यक्ष वा समूहले तोकेको पदाधिकारी — संयोजक
    - सम्बन्धित क्षेत्रको सव डिभिजन वन कार्यालयको प्रतिनिधि — सदस्य
    - स्थानीय वडा अध्यक्ष वा वडा कार्यालयले तोकेको प्रतिनिधि — सदस्य
    - स्थानीय उद्योग वाणिज्य संघको प्रतिनिधि — सदस्य
    - समूहको सचिव — सदस्य-सचिव
- उपदफा (१) (ख), (ग) र (घ) बमोजिमको सदस्य तोकी पठाइदिन समूहले सम्वन्धित निकायलाई पत्राचार गर्नुपर्नेछ । समितिले पूर्णता पाइसकेपछि बैठक बसी समितिलाई प्राप्त कार्यसूची, पर्यापर्यटन व्यवसाय सञ्चालन सम्बन्धी कार्ययोजना र यो निर्देशिकाको अधिनमा रही कार्य गर्नु पर्नेछ ।

- उपदफा (१) वमोजिम गठित व्यवस्थापन समितिको काम कर्तव्य र अधिकार देहाय बमोजिम हुनेछ
    - समूहले कार्ययोजनामा उल्लेख गर्ने पर्यापर्यटन सम्बन्धी विषयवस्तु पहिचान गर्ने
    - पर्यापर्यटन व्यवसाय संचालन गर्ने सम्वन्धमा समूहलाई आवश्यक सहयोग र सहजीकरण गर्ने,
    - समूह आंफैले पर्यापर्यटन व्यवसाय सञ्चालन गर्ने भए त्यसको व्यवस्थापकीय भूमिका निर्वाह गर्ने,
    - समूहले सहकारी, निजी क्षेत्र, स्थानीय तहसंग साझेदारीमा व्यवसाय सञ्चालन गर्ने भए सो सम्बन्धी आशयपत्र आव्हान गर्ने, प्राप्त हुन आएका आशयपत्रहरु मूल्याङ्कन गरी छनौट गर्ने, आर्थिक र प्राविधिक प्रस्ताव माग गर्ने, प्राप्त आर्थिक तथा प्राविधिक प्रस्तावहरुको मूल्याँकन गरी प्रस्तावक छनौट गर्ने ।
    - पर्यापर्यटन सम्बन्धी विभिन्न क्रियाकलापहरुको पहिचान र शुल्क निर्धारण गर्न समूहलाई सहयोग गर्ने, पर्यापर्यटन व्यवसायको अनुगमन तथा पृष्ठपोषण गर्ने ।
    - प्रस्ताव मूल्याङ्कनका आधार सूचक तथा सूचकाङ्कहरु तयार गरी अनुमोदन गर्ने ।
    - प्रस्ताव मूल्याङ्कन सम्बन्धि काम गर्न थप सेवा आवश्यक भएमा समितिले बढिमा २ जना विज्ञ वा परामर्शदाताको सेवालिन सक्नेछ ।

**८. आशयपत्र तथा प्रस्तावको आव्हान, मूल्याङ्कन र करारनामा**

- व्यवसाय सञ्चालनका लागि समूहले निजी क्षेत्रसंग साझेदारी गर्ने भएमा देहायका कुराहरु खुलाई राष्ट्रिय दैनिक पत्रिकामा २१ दिनको सार्वजनिक सूचना प्रकाशन गरी आशयपत्र माग गर्नुपर्नेछ ।
    - सामुदायिक वनको नाम, ठेगाना, क्षेत्रफल र चारकिल्ला र प्रस्तावित पर्यापर्यटन कार्यक्रम
    - आवेदन फारमको ढाँचा प्राप्त गर्न सक्ने स्थान, वेभसाइट, आवेदन दस्तुर
    - आशयपत्रमा समावेश हुनु पर्ने मुख्य मुख्य कुराहरु, जस्तैः फर्म कम्पनी संघसंस्थाको दर्ताको प्रमाण, नवीकरण, भ्याट वा प्यान सम्बन्धी प्रमाण, आयकर चुक्ता सम्बन्धी प्रमाण, प्रस्तावित पर्यापर्यटन व्यवसाय र अवधि तथा सञ्चालनको अनुभव आदि
    - आशयपत्र बुझाउने स्थान, अन्तिम मिति, बुझाउने विधि, सम्पर्क व्यक्तिको फोन नम्बर र इमेल
    - अन्य आवश्यक शर्तहरु
- उपदफा (१) को समय सीमाभित्र आशयपत्र प्राप्त नभएमा वा एक मात्र आशयपत्र प्राप्त भएमा प्राप्त आशय पत्रलाई कायमै राखी पुनः ७ (सात) दिनको सूचना प्रकासित गर्नु पर्नेछ ।
- प्राप्त हुन आएका आसयपत्रहरु दफा ७ बमोजिमको समितिको बैठक राखी आशयपत्र खोली पूर्व निर्धारित आधार र सूचकहरुको आधारमा मूल्याङ्कन गर्नु पर्नेछ ।
- दुई वटामात्र रीतपूर्वकका आशय पत्र प्राप्त भएमा दुवैलाई र तीन वा सोभन्दा बढी आशयपत्र प्राप्त भएमा कम्तीमा ३ वटा आशयपत्र छनौट गरी आशयपत्रदातालाई विस्तृत कार्ययोजना सहित

देहायका विषयवस्तु खुलाई आर्थिक तथा प्राविधिक प्रस्ताव पेश गर्न १५ दिनको म्याद दिई पत्र मार्फत् आव्हान गर्नुपर्छ ।

- प्रस्तावकको नाम, ठेगाना र कार्य अनुभवको विवरण
- सञ्चालन गर्न चाहेको पर्यापर्यटन व्यवसायको उद्देश्य, कृयाकलाप सहितको किसिम, विस्तृत डिजाइन सहितको नक्सा, सेवाग्राहीसँग लिइने शुल्कको संरचना, समग्र लागत तथा लाभको विश्लेषण सहितको व्यावसायिक योजना र सो को संचालनबाट सामुदायिक वन तथा समूहमा पर्न सक्ने सकारात्मक र नकारात्मक पक्षहरुको विश्लेषण
- सेवाग्राहीसँग लिने प्रस्तावित शुल्क र समुहलाई बुझाउने शुल्क सम्बन्धी व्यवस्था
- व्यवसायिक र दक्ष जनशक्ति सम्बन्धी विवरण
- वातावरणीय व्यवस्थापन (प्रदुषण नियन्त्रण, फोहोरमैला व्यवस्थापन, जैविक विविधता संरक्षण आदि),
- सामाजिक उत्तरदायित्व सम्बन्धी व्यवस्था (सामाजिक सम्बन्ध सुमधुर बनाउन र विस्तार गर्नको लागि गरिने क्रियाकलापहरु)
- अपराधजन्य घटना वा दुर्घटना नियन्त्रणको लागि अवलम्बन गरिने सुरक्षाका उपाय र पूर्व तयारी
- विविध
- दफा ६ बमोजिमको समितिले समितिको बैठकमा उपदफा (४) बमोजिम प्राप्त प्रस्ताव प्रस्तुत गरी मूल्याङ्कन गर्नु पर्नेछ ।
- मूल्याङ्कन गरिएका प्रस्तावहरुमध्ये उच्चतम अङ्क प्राप्त गर्ने प्रस्तावलाई छनौट गरी करारनामाको लागि सामुदायिक वन उपभोक्ता समितिमा सिफारिस गरी सम्बन्धित प्रस्तावकलाई जानकारी पाएको ७ (सात) दिनभित्र करारनामा गर्न आउन करारनामाका शर्तहरु उल्लेख गरी पत्राचार गर्नु पर्नेछ । सो को विवरण समूहको सूचना पाटीमा टाँस गरी सार्वजनिक गर्नु पर्नेछ । दोश्रो र तेश्रो उच्च अंक प्राप्त गर्ने प्रस्तावको प्रस्तावकलाई प्राप्त अंक र स्थानको विवरण सहित निजको सम्पर्क ठेगानामा पठाउनु पर्नेछ ।
- सर्वाधिक अङ्क प्राप्त गर्ने प्रस्तावकले उपदफा (६) बमोजिम करारनामा गर्न नआएमा दोस्रो बढी अंक प्राप्त गर्ने प्रस्तावकलाई करारनामा गर्न आउन ७ (सात) दिनको म्याद दिई बोलाउनु पर्दछ । यसैगरी दोस्रो बढी अंक प्राप्त गर्ने प्रस्तावक पनि पूर्व सूचना र चित्त बुझ्दो कारण बेगर म्यादभित्र अनुपस्थित भएमा तेस्रो बढी अंक ल्याउने प्रस्तावकलाई ७ (सात) दिन भित्र बोलाई करारनामा गर्नु पर्नेछ ।
- सर्बाधिक पहिलो, दोस्रो र तेस्रो अङ्क ल्याउने कुनै पनि प्रस्तावकहरु म्यादभित्र करारनामा गर्न नआएमा समितिले व्यवसाय सञ्चालन गर्न इच्छुक अन्य ब्यक्ति, संघ संस्था, फर्म वा कम्पनीवाट प्रस्ताव माग गरी दुई पक्षीय वार्ताको माध्यमबाट व्यवसाय सञ्चालनको लागि प्रस्तावक छनौट गरी करारनामा गर्न सिफारिस गर्न सक्नेछ ।
- माथि जुनसुकै कुरा लेखिएको भएता पनि समितिले प्रस्ताव मूल्याङ्कन गरी प्रस्तावक छनौट गरिसकेपछि सामुदायिक वन उपभोक्ता समितिले त्यसलाई अनुमोदन गर्नु पर्नेछ । अनुमोदित प्रस्तावलाई स्वीकृत गरी सामुदायिक वनको कार्ययोजनामा समावेश गर्न सिफारिस सहित डिभिजन वन कार्यालयमा लागि पठाउनु पर्नेछ ।

९. करारनामामा समावेश गर्नुपर्ने मुख्य शर्तहरु

(१) सामुदायिक वन उपभोक्ता समितिले दफा ७ बमोजिम छनौट गरिएका प्रस्तावकसँग करारनामा गर्दा देहायका कुराहरु प्रष्ट रुपमा उल्लेख गर्नुपर्छ ।

(क) पर्यापर्यटन व्यवसाय सञ्चालकले करारनामा गर्दा बुझाउनुपर्ने रकम, धरौटी वा बैङ्क ग्यारेण्टी रकम

(ख) करारनामा भएपछि व्यवसाय आरम्भ गरिसक्नु पर्ने अवधि

(ग) पर्यापर्यटन क्षेत्रमा गर्न नहुने कृयाकलापहरु

(घ) सञ्चालन गरिने विभिन्न कृयाकलापहरुको दफा १० बमोजिमको शुल्क र कर

(ङ) सञ्चालक, कर्मचारी वा कामदार र सेवाग्राही र समूहले पालन गर्नुपर्ने आचारसंहिता

(च) सरकारी तथा गैरसरकारी संस्थावाट पर्यापर्यटनको लागि आर्थिक अनुदान सहायता प्राप्त गर्ने र खर्च गर्ने तरिका

(छ) समूहले सेवा प्रदायक वा सञ्चालकलाई उपलब्ध गराउने भौतिक पूर्वाधार निर्माण वा व्यवस्थापन सम्बन्धी सहयोग

(ज) कुनै पक्षबाट करारका शर्तहरु उलंघन गरिएमा त्यसवापत् हुने कारवाही सम्बन्धी व्यवस्था वा क्षतिपूर्ति सम्बन्धी शर्तहरु

(झ) करारनामा सम्बन्धी विवाद उत्पन्न भएमा त्यसको अन्तिम व्याख्या गर्ने निकाय वा अधिकारी

(ञ) अपराध नियन्त्रणमा सेवा प्रदायक, समूह र वन कार्यालयको भूमिका

(ट) सेवा प्रदायकका सामाजिक, साँस्कृतिक र वातावरणीय दायित्व सम्बन्धी कुराहरु आदि ।

(२) उपदफा (१) मा उल्लेखित करारनामाका शर्तहरुको पालना गर्नु गराउनु करारनामाका पक्षहरुको कर्तव्य र जिम्मेवारी हुनेछ ।

१०. प्रतिवेदन पेश गर्नुपर्ने

(१) पर्यापर्यटन व्यवसाय सञ्चालकले प्रत्येक आर्थिक बर्षमा चौमासिक र वार्षिक अवधि समाप्त भएको ७ दिनभित्र समूहलाई आवधिक प्राविधिक तथा आर्थिक प्रतिवेदन पेश गर्नुपर्नेछ ।

११. अनुगमन तथा निरीक्षण सम्बन्धी व्यवस्था

(१) समूहले आफ्नो सामुदायिक वनमा नियमित अनुगमनको व्यवस्था मिलाई संचालकले दफा १० अनुसार पेश गरेको प्रतिवेदनको स्थलगत रुपमा जांच गरी सञ्चालकलाई नियमित रुपमा पृष्ठपोषण दिनु पर्नेछ र सो को प्रतिवेदन समूहको साधारण सभामा प्रस्तुत गर्ने व्यवस्था मिलाउनु पर्नेछ ।

(२) सम्वन्धित सब डिभिजन वन कार्यालयले आफ्नो क्षेत्रका सामुदायिक वनमा सञ्चालित पर्यापर्यटन कार्यक्रमको नियमित अनुगमन तथा निरीक्षण गरी डिभिजनल वन कार्यालयमा प्रतिवेदन पेश गर्नु पर्नेछ ।

## १२. व्यवसाय सञ्चालनको अवधि

- पर्यापर्यटन सम्बन्धी व्यवसाय सञ्चालकसँग पहिलो पटक बढीमा कार्ययोजनाको १० वर्षको लागि करारनामा गर्न सकिनेछ । दफा ७ बमोजिमको समितिले करारनामा अनुसारको कामको वार्षिक तथा मध्यावधि मूल्याङ्कन गरी आवश्यक पृष्ठपोषण दिनुपर्नेछ । संचालकको काम सन्तोषजनक भएको अवस्थामा करारनामाका शर्तहरुमा समसामयिक संशोधन गरी एक अवधिका लागि व्यवसाय सञ्चालनको म्याद थप गर्न सकिनेछ ।

- दफा १३ बमोजिम व्यवसाय बन्द गरिएको अवस्थामा वा करारनामाको अवधि एक पटक थप भई समाप्त भएको अवस्थामा पुनः प्रस्तावसहितको आवेदनको लागि सूचना प्रकाशित गरी प्रस्तावक छनौट प्रक्रिया अघि बढाउनु पर्नेछ ।

## १३. व्यवसाय बन्द गर्न सकिने

- वार्षिक तथा मध्यावधि मूल्याङ्कनमा सञ्चालकको कार्य र व्यवस्थापन पक्ष संतोषजनक नदेखिएमा वा संचालकले करारनामाका शर्तहरुको र कार्ययोजनाको पालना गर्न नसकेको वा सामुदायिक वनमा उल्लेखनीय प्रतिकूल असर पर्ने कुनै कार्य गरेको जानकारी हुन आएमा डिभीजनल वन अधिकृतले सम्बन्धित सब डिभिजनल कार्यालय वा समूह मार्फत यथाशक्य चांडो अनुगमन गरी गराई सो को आधारमा निम्न कार्यहरु गर्नुपर्ने छ ।

- करारनामाका शर्तहरुको पालना तथा कार्ययोजना बमोजिम कार्य संचालन नगर्नु नगराउनुको उचित कारण सहित १५ दिनको म्याद दिई संचालकलाई स्पस्टीकरण माग गर्ने छ ।

- संचालकले पेश गरेको स्पस्टिकरण सन्तोषजनक नभएमा वा स्थलगत प्रतिवेदनबाट पर्यापर्यटन व्यवसाय बन्द गर्न उचित ठहर्याईएमा समूहले व्यवसाय वन्द गरी सो को जानकारी संचालकलाई दिनुपर्ने छ ।

- माथि (क) र (ख) मा उल्लेख भए अनुसारका कार्यहरु समूहले उपयुक्त समयमा नगरेमा डिभीजनल वन अधिकृतले स्वयंले सम्पन्न गरी समूहलाई सचेत गराउने लगायतका कानुनी कारवाही गराउन सक्ने छ ।

## १४. शुल्क तथा कर निर्धारण सम्बन्धी व्यवस्था

- शुल्क सम्वन्धि सम्पूर्ण व्यवस्था समूहको सधारणसभावाट निर्णय गराई स्वीकृत कार्ययोजनामा व्यवस्था भए वमोजिम हुनेछ ।

- पर्यापर्यटन व्यवसायमा अनुभवी व्यक्ति, विज्ञ तथा सम्बन्धित सरीकारका निकायसंग प्रयाप्त समन्वय र परामर्श गरी सेवाग्राहीबाट लिइने शुल्क निर्धारण गर्नु पर्नेछ ।

- संघीय र प्रदेश सरकार तथा स्थानीय तहबाट संकलन गरिने करको हकमा प्रचलित कानून र निर्धारित प्रक्रिया बमोजिम गर्नुपर्नेछ ।

## १५. प्राप्त लाभको सदुपयोग सम्बन्धी व्यवस्था

पर्यापर्यटन व्यवसाय सञ्चालवाट समूहले आर्जन गरेको रकम समूहको कोषमा जम्मा गरी "सामुदायिक वन उपभोक्ता समूहको आर्थिक कार्यविधि निर्देशिका २०७३" बमोजिम वार्षिक कार्यक्रम तथा बजेट तयार गरी समूहले खर्च गर्न सक्नेछ ।

## १६. स्थानीय वस्तु, सेवा र कलालाई उच्च प्राथमिकता दिनुपर्ने

सामुदायिक वनमा पर्यापर्यटन व्यवसाय सञ्चालकले आफ्नो व्यवसायको प्रवर्धनको लागि स्थानीयस्तरमा उत्पादित वस्तु, सेवा, कला र संस्कृतिको प्रयोगलाई उच्च प्राथमिकता दिनु पर्नेछ ।

## १७. स्थानीय रोजगारीलाई प्राथमिकता दिनुपर्ने

सामुदायिक वनमा पर्यापर्यटन व्यवसाय सञ्चालकले आफ्नो व्यवसाय सञ्चालनको लागि स्थानीय जनशक्तिलाई रोजगारीको लागि प्राथमिकता दिनु पर्नेछ ।

## १८. अन्तिम व्याख्या गर्ने अधिकार

यस निर्देशिकाको कार्यान्वयन गर्ने क्रममा यसमा उल्लेखित विषयमा कुनै विवाद उत्पन्न भएमा त्यसको व्याख्या गरी निर्णय दिने अन्तिम अधिकार सम्बन्धित प्रदेश उध्योग, पर्यटन वन तथा वातावरण मन्त्रालयमा हुनेछ ।

## १९. विविध

- डिभिजन वन कार्यालयले सामुदायिक वनमा पर्यापर्यटन व्यवसाय संचालन गर्ने समूहको छुट्टै लगत व्यवस्थित गर्नुपर्नेछ ।
- हाल सामुदायिक वनमा पर्यापर्यटन संचालन गरिरहेका समूहले यसै कार्यविधि निर्देशिकामा उल्लेखित अन्तर्वस्तु र प्रकृया अनुसार व्यवस्थित गरी गराई तीन महिना भित्र सम्वन्धित डिभिजन वन कार्यालयमा प्रतिवेदन दिई डिभिजन वन कार्यालयमा अभलेखित गराउनुपर्नेछ ।

### अनुसूचीहरुः

अनसूची १

पर्यापर्यटन व्यवसाय संचालनका लागि कार्ययोजनामा समावेश गर्नुपर्ने विषयहरु (दफा ५ को उपदफा (२) सँग सम्बन्धित)

(क) पर्यापर्यटन सम्वन्धि छुट्टै परिच्छेदको व्यवस्था

(ख) वन ऐन २०४९, वन नियमावली २०५१, सामुदायिक वन विकास कार्यक्रमको मार्गदर्शन २०७१ समेतमा भएका सामुदायिक वनमा पर्यापर्यटन सम्बन्धी व्यवस्था र कार्यान्वयन :

(ग) पर्यापर्यटनको लागि सामुदायिक वनको जग्गा उपयोग वारे विस्तृत विवरण, प्रचलित कानून अनुकुलका व्यवस्थाहरु सहित निर्माण एवं व्यवसथापन गर्न सकिने हरित पूर्वाधारको विवरण

(घ) सञ्चालन गर्ने चाहेको पर्यापर्यटन व्यवसायको उद्देश्य, कृयाकलाप सहितको किसिम, विस्तृत डिजाइन सहितको नक्सा, सेवाग्राहीसँग लिइने शुल्कको संरचना, समग्र लागत तथा लाभको विश्लेषण सहितको व्यावसायिक योजना

(ङ) साझेदारीमा संचालन गर्ने भएमा समूह, स्थानीय तह, सहकारी र निजी क्षेत्रबीचको व्यवसायिक साझेदारीको आवश्यक्ता, सकारात्मक र नकारात्मक पक्षहरुको विश्लेषण सहित आपसि सहयोग तथा नियन्त्रणको व्यवस्था, लगानी र लाभको बांडफाड, करारनामाको तरिका तथा आवधिक शुल्क सम्वन्धि व्यवस्था

(च) व्यवसाय सञ्चालकले पालन गर्नुपर्ने आधारभूत शर्तहरु सहित व्यवस्थापनको लागि संलग्न निकायको स्पष्ट भूमिका र जिम्मेवारी

(छ) पर्याघर्यटन कृयाकलापहरुको व्यवस्थापन तथा नियमनको लागि समूहस्तरवाट बनाइने संयन्त्रको संरचना र सो संरचनाको भूमिका र जिम्मेवारी

(ज) व्यवसाय सञ्चालनबाट वन, वातावरण, समुदायको सांस्कृतिक-ऐतिहासिक पक्षमा पर्न सक्ने संभावित प्रतिकुल असरको पहिचान र न्यूनीकरण तथा नियन्त्रण गर्ने उपायहरु

(झ) पर्यापर्टनबाट स्थानीयस्तरमा सृजना हुने रोजगारीको प्रकार र विवरण

(ञ) विधान तथा स्वीकृत कार्ययोजनामा व्यवस्थित कृयाकलाप विपरित हुनसक्ने कार्यहरुको नियन्त्रण गर्ने विधि र प्रकृया ।

## अनुसूची २

सामुदायिक वनक्षेत्रमा सञ्चालन गर्न सकिने पर्यापर्यटन व्यवसाय सम्बन्धी क्रियाकलापहरु (दफा ५ उपदफा ५ सँग सम्बन्धित)

(क) सामुदायिक वनभित्र वा आसपासका ऐतिहासिक, धार्मिक र पुरातात्विक महत्वका मठ, मन्दिर, चैत्य, गुम्वा, गुफा, झरना, सिमसार लगायतका सम्पदाहरुको संरक्षण, व्यवस्थापन र विकासमा टेवा पुग्नेगरी अवलोकन-भ्रमण, पदयात्रा, वन विहार, पौडी पोखरी, जलविहार जस्ता कार्यहरु सञ्चालन गर्ने

(ख) प्राकृतिक सौन्दर्य, भूदृष्य एवं वन्यजन्तु अवलोकनको लागि मचान निर्माण र सञ्चालन

(ग) सामुदायिक वनमा पाइने काष्ठ, गैहकाष्ठ वनस्पति प्रजाति र वन्यजन्तु लगातयत जैविक विविधता संरक्षण सम्बन्धी Information Center स्थापना र सञ्चालन

(घ) दफा ६ अनुसारको व्यवस्था गरी असहाय, मुद्दाको रोहमा प्राप्त भएका तथा उद्दार गरिएका वन्यजन्तु संग्रह, पालन तथा मिनी चिडियाखाना स्थापना र ब्यवस्थापन ।

(ङ) जंगली पुष्प बगैंचा, जैविक विविधता पार्क, इको-बाल उद्यान आदि सञ्चालन गर्ने

(च) न्यूनतम क्षेत्रफल (समग्र वनको क्षेत्रफलको दश प्रतिशत वा पाँच हेक्टरमा जुन न्यून हुन्छ सोही) मा नवढ्ने गरी स्थाई भौतिक संरचना (पाहुना घर, पक्की शौचालय, रेष्टुरेण्ट, गिफ्ट सप, चौकिदार तथा टिकट काउण्टरको लागि घर, जनावरको आश्रयस्थल आदी) निर्माण गर्ने

(छ) बाँस, बेत, खर-खडाई आदि स्थानीय सामाग्री र प्रविधि प्रयोग गरी तोकिएको स्थानमा कटेज, प्रतिक्षालय, गोलघर, आराम स्थल, अस्थाई पसल तथा रेस्टुरेन्ट आदि निर्माण गरी सञ्चालन गर्ने

(ज) वातावरण मैत्री हरित पूर्वाधारहरु (ढुङ्गा माटोको गोरेटो, पदमार्ग, हाईकिङ्ग रुट, वाकिङ्ग रुट, साइकलिङ्ग रुट, आराम बेञ्च तथा कुर्चिहरु, डस्ट बिन, इको गार्डेन, दुबोको हरियाली चौर, टेण्टेड क्याम्प, पिकनिक स्पटको व्यवस्थापन

(झ) **पर्यापर्यटनको लागि सामुदायिक वनको जग्गा प्रयोग गरेवापत कबुलियती वनमा नेपाल सरकारले लिने न्यूनतम कबुलियती दस्तुरलाई आधारमानि प्रस्ताव आह्वान गर्नु पर्ने**

(ञ) समूहको दैनिक कृयाकलाप सञ्चालन गर्न असुविधा नहुने गरी सुरक्षाको लागि चार किल्ला घेर्न वा तारवार लगाउन

(ट) एलिफेन्ट सफारी, हर्स राइडिङ्ग, वर्ड वाचिङ्ग, वटरफ्लाई वाचिङ, फिसिङ, भिडियोग्राफी, साइक्लिङ, फोटो टुर, क्यानोपि वाक, हाइरोप, केवल कार आदि सञ्चालन गर्न ।

अनुसूची ३

सामुदायिक वनमा पर्यापर्यटन सञ्चालन गर्दा गर्न नहुने कार्यहरु (दफा ५ को उपदफा ६ सँग सम्बन्धित)

- सामुदायिक वनमा गर्न नहुने भनी वन नियमावली २०५१ को नियम ३१ मा उल्लेखित कार्यहरु
- स्वीकृत कार्ययोजनामा पर्यापर्यटन व्यवसायको लागि गर्न सकिने भनी उल्लेख भएका कार्यहरु वाहेकका कार्यहरु
- नयाँ मोटर वाटो लगायतका पूर्वाधार निमार्ण गर्न, पानीको स्रोत तथा खोलानाला थुन्न, वहाव परिवर्त गर्न वा स्थानीयवासिले उपयोग गरिराखेको स्रोतमा कुनै पनि तरिकावाट अवरोध पुऱ्याउन ।
- वन्यजन्तुलाई पक्रन, घाइते वनाउन, वा मार्न वा दुख दिन, वास्थानमा असर पुऱ्याउन, होहल्ला गरी असर पर्ने कुनै कृयाकलाप गर्न गराउन
- कार्ययोजनामा स्वीकृत भएको अवस्थामा वाहेक सामुदायिक वनका वन पैदावारहरु काट्न, उखेल्न, क्षति पुर्‍याउन, मास्न र ओसार पसार गर्न
- भूआकृति, भूदृष्य र विशेष भौगोलिक अवस्थालाई बिगार्ने कार्य वा कुनै तरिकावाट तोडमोड गर्न
- वातावरण प्रदुषित गर्ने कृयाकलापहरु जस्तैः माटो, पानी र ध्वनी तथा वायु प्रदुषण हुने कृयाकलापहरु गर्न गराउन
- स्थानीय समुदायको संस्कृति र स्थापित परम्परालाई नकरात्मक असर पुर्‍याउने कृयाकलापहरु गर्न गराउन